# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

पौष, २०६७

पूजनीय गुरुमाताको अभिनन्दन समारोह तथा अन्तर्राष्ट्रिय साधना शिविर

## सद्‌गुरु विशेष

www.gnv.org.np

आत्ममा गुरुको अस्तित्व खोज्नेहरू

गुरु परिवर्तन गर्दै हुनुहुन्छ ?

महासरस्वती पूजन

# हार्दिक आमन्त्रण

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरुप
सिद्धाश्रम शक्ति केन्द्र नेपालले पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको
अभिनन्दन तथा अन्तराष्ट्रिय साधना शिविरको
आयोजना गरेको कुरा सहर्ष जानकारी गराउँदछौं । कार्यक्रम यही माघ २२ र
२३ गते काठमाडौंको पशुपति, वनकालीमा सम्पन्न हुनेछ । शिष्यवत्सला,
गुरुस्वरूपा पूजनीय माताजी कै सान्निध्यतामा उहाँकै मुखारविन्दबाट
गुरुमन्त्र प्राप्त हुने यस्तो दिव्य अवसरमा सहभागी हुन सबैलाई
हार्दिक अनुरोध गर्दछौं । सीमित कोटा रहेको साधना
कार्यक्रममा सहभागिताका लागि यथाशिघ्र नाम दर्ता गराई
आफ्नो स्थान सुरक्षित गर्नुहोला ।

सम्पर्क:
सिद्धाश्रम शक्ति केन्द्र
काठमाडौं, नेपाल, फोन: ०१-२१००१५३, ४३८९१५४

● वर्ष १२ ● अङ्क ५ ● पौष २०६७ ● पूर्णाङ्क १३७

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## सद्गुरु विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

मानवजीवनमा सद्‌गुरुको प्राप्ति आफैमा अहोभाग्य हो। कैयौं जन्मको पूण्यकर्मको माध्यमबाट मात्रै मनुष्यले सद्‌गुरुसँग जोडिने अवसर प्राप्त गर्दछन्। त्यसैले, मानवजीवनको एक मात्र र अन्तिम उपलब्धि भनेको सद्‌गुरु प्राप्ति हो। त्यसैले तपाईं पनि सद्‌गुरुसँग आजसम्म पनि जोडिने सौभाग्य प्राप्त गर्नुभएको छैन भने आजै सिद्धाश्रम शक्ति केन्द्रमार्फत् सद्‌गुरुहरुसँग जोडिई जीवनलाई सौभाग्यमा बदल्ने कोशिश गर्नुहोला।

तपाईं हामी सम्पूर्णलाई खुशीको खबर के छ भने हाम्रो सामु परम वन्दनीय, परम आदरणीय पूजनीय गुरुमाताको आगमन यही माघ २२ र २३ मा हुँदैछ। पूजनीय गुरु माताको भव्य स्वागत एवं राष्ट्रिय रुपमा अद्वितीय अभिनन्दन कार्यक्रमको साथमा माताले नै नेतृत्व गरी गुरुमन्त्र प्रदान गर्ने यस दिव्य कार्यक्रममा सहभागी हुने सौभाग्य प्राप्त हुने भएको छ। त्यसैले यस्तो अद्वितीय अवसरमा सहभागी भई जीवनलाई धन्य बनाउन यहाँ सम्पूर्णमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। गुरु सत्ताको कदर नै शिष्यको धर्म हो। यतिबेला हाम्रो सामु सम्पूर्ण गुरुत्व शक्तिलाई धारण गरी लाखौं-करोडौं शिष्यको आस्था, विश्वासको प्रतीकको रुपमा साक्षात् गुरुमाता विराजमान् हुनुहुन्छ। उहाँको सम्मान गर्नु, आदर गर्नु, हाम्रो दायित्व पनि हो। त्यसैले सम्पूर्णलाई सहभागिताको लागि हार्दिक अनुरोध गर्दछौं।

यस अंकलाई हामीले 'सद्‌गुरु विशेष'को रुपमा निकाल्ने कोशिश गरेका छौं। सद्‌गुरुको बारेमा कुनै चर्चा गर्न खोज्नु आफैमा असम्भव छ। तैपनि शिष्यधर्मलाई पालना गर्दै सद्‌गुरुको उच्चता, गरिमा, दिव्यतालाई अंश रुपमा भए पनि प्रकाश पार्न खोजिएको छ। महासागररुपी सद्‌गुरुको बारेमा एकथोपा मात्रै भए पनि चर्चा गर्न खोज्दा भए गरेका कमी-कमजोरीका लागि सद्‌गुरुदेवहरुसँग क्षमायाचना गर्दछौं।

अन्तमा, यहाँहरु पनि सद्‌गुरुसँग जोडिई आफ्नो जीवनलाई धन्य बनाउनुहोस्। यस अंकमा भए गरेका कमी-कमजोरी, न्यूनताका लागि परमपूज्य सद्‌गुरुदेवसमक्ष र यहाँहरु समक्ष पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह-सुझावको अपेक्षा राख्दछौं।

अस्तु।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# सद्गुरु बिना हुँदैन ज्ञान

कुनै पनि संस्कृति आफ्नो विकास यात्रामा त्यत्तिकै महान बन्दैन । त्यस संस्कृतिमा केही यस्ता गुण बन्न गएपछि मात्र त्यसको सम्पूर्ण विकास हुन्छ, परम्पराहरूको पूर्ण निर्वाह हुन्छ, एउटा ठोस आधार भएमा मात्रै संस्कृति महान् बन्छ र त्यस संस्कृतिको गौरवशाली वर्तमान र पछि पनि गौरवशाली भविष्य हुन्छ ।

हाम्रो संस्कृति र पश्चिमी संस्कृतिमा आधारभूत अन्तर यो रहेको पाइन्छ कि उनीहरूसँग आधारभूत शक्ति छैन । बाहिरबाट तगडा देखिने व्यक्ति भित्रभित्रै खोक्रो हुन्छ, यस्तोको जीवनको लक्ष्य केवल भौतिक मात्रै हुन्छ, न सम्बन्धको परम्परा हुन्छ, न त कहीं ज्ञानको परम्परा नै । त्यसैकारण विरोधाभास शुरु भएको बेला कतै पनि ठेगाना मिल्दैन । त्यस्तो स्थानमा अधिक व्यभिचार, अनाचार, अत्याचार हुन्छ । तर हाम्रो संस्कृति त आदर्श, त्याग, ज्ञान, तप, तपस्या, साधना, उपासना, शक्तिको उर्वर भूमिमा विकसित एउटा विशाल वृक्ष हो ।

यहाँ जसले जे पाए पनि त्यसलाई अरूलाई पनि बाँड्ने सत्प्रयास भएको छ । पाउनेले आफ्ना

छ, त्यस्तै गुरुका लागि पनि आवश्यक हुन्छ ।

उत्तरकाण्ड रामचरितमानसमा लेखिएको छ– 'बिना गुरु ज्ञान हुँदैन ।' ज्ञानको विषयमा हिरण्य संहितामा भनिएको छ– गुरु त ज्ञानको सागर हुनुहुन्छ, जुन ज्ञानलाई सद्‌गुरुदेवले आफ्नो मुखबाट उच्चरित गर्नुभएको हुन्छ, त्यो निरर्थक जाँदैन । जब सागर आफू नजिक छ, तब तपाइँ यस ज्ञान सागरबाट कति ज्ञान लिन सक्नुहुन्छ, त्यो तपाईंको योग्यतामाथि निर्भर गर्दछ । त्यसैले यस्तो पनि

सबै ज्ञान बाँडे, आफ्ना ज्ञानले हजारौँ-हजारको जीवनमा प्रकाशको उदय गरे । यस्ता व्यक्तित्वहरू नै गुरु हुनुभयो । यसैले गुरुलाई ईश्वरसमान् मानिएको हो ।

'गुरुर्ब्रह्मा गुरुर्विष्णु गुरुर्देवो महेश्वरः' किनकि गुरुले शिष्यको निर्माण गर्नुहुन्छ, त्यसैले उहाँ ब्रह्मा हुनुहुन्छ, गुरुले शिष्यको रक्षा गर्नुहुन्छ, त्यसैले विष्णु हुनुहुन्छ, र गुरु साक्षात् महेश्वर हुनुहुन्छ, उहाँले शिष्यको दोषहरूको संहार गर्नुहुन्छ। यसैले व्याकरण शास्त्रमा 'गुरु' शब्दको अर्थ हो– गृणातोति गुरुः, 'गृ' निगरणे अर्थात् जसले भित्रबाट केही निकालेर दिनुहुन्छ, उहाँलाई गुरु भनिन्छ । त्यसमा पनि 'गुरु'को पहिलो अक्षर 'गु' को अर्थ अन्धकार र 'रु' को अर्थ हो– त्यसलाई हटाउने । यही मूल गुरुतत्त्व हो। ईश्वरको अस्तित्वको सम्बन्धमा शङ्का हुन सक्छ, भिन्नाभिन्नै मानिसहरूले भिन्नाभिन्नै देवीदेवताहरूको र भगवान्‌को ध्यान गर्न सक्छन् । तर गुरुको सम्बन्धमा कुनै शङ्का र मतभेद पाइन्न। सबैले गुरुको महानता र महत्त्वलाई मानेका छन् । त्यसैले 'यस्य देवे परा भक्ति देवे तथा गुरौ' अर्थात् जस्तो भक्तिको आवश्यकता देवताहरूका लागि

लेखिएको पाइन्छ–

**सतगुरु बपुरा क्या करे, जो शिष माही चूक ।**
**भावे त्यं परबोधि लै, ज्यों बंसि बजाई फूंक ॥**

बाँसुरीमा त मधुर संगीत उत्पादन गर्ने क्षमता हुन्छ । तर त्यस ध्वनिलाई उत्पन्न गर्नेले केवल फुकिरहन्छ र कुनै लयबद्ध स्वर निकाल्न सक्दैन भने मधुर सङ्गीत कसरी उत्पन्न हुन्छ ? यदि शिष्यले नै ज्ञानको उपयोग गर्न सक्दैन भने, ज्ञानलाई अपनाउन सकेन भने गुरुको के दोष ?

**जन मन मंजु मुकुर मल हरनी,**
**किए तिलक गुन गन बस करनी ।**
**श्री गुरु पद नख मनि गन जोती,**
**सुमिरत दिव्य दृष्टि हिय होती ॥**

अर्थात् गुरु हृदयको विकारहरूलाई दूर गरेर स्वच्छ दर्पण सदृश बनाउनुहुन्छ, उहाँको चरणको नङबाट त्यो ज्योति निस्कन्छ जसले हाम्रो हृदयलाई प्रकाशित गर्दछ ।

ईश्वरको कृपा छैन भने पनि गुरुसित मार्ग सोध्न सकिन्छ, आफ्ना दोषहरूका सम्बन्धमा जान्न सकिन्छ । तर यो पनि सत्य हो कि–

**हरि रुठे गुरु ठौर है, गुरु रुठे नही ठौर ।**

## गुरुका भेद

शास्त्रका अनुसार तीन प्रकारका गुरु मानिएको पाइन्छ–१) कुलगुरु, २. विद्यागुरु र ३. धर्मगुरु । एक परिवारका कुलगुरुलाई सबै परिवारद्वारा पूजा गरिन्छ। जसले शिक्षा दिनुहुन्छ, उहाँ विद्यागुरु हुन् । यिनमा अध्यापक, शिक्षकको स्थान आउँछ । तेस्रो र सबैभन्दा महत्त्वपूर्ण गुरु धर्मगुरु हुनुहुन्छ जसलाई शिष्य आफ्नो जीवनमा आफ्नो राम्ररी हेरी-बुझी ग्रहण गर्दछन् । धर्मगुरुबाटै शिष्यले दीक्षा ग्रहण गर्दछन्। धर्मगुरुबाट शिष्यले त्यो मन्त्र प्राप्त गर्दछ जसलाई उसले आफ्नो पूरा जीवनमा पालन गर्दछ। तर शिष्य नाम गरेको यस जीव बडो अभिमान, अहङ्कार तथा व्यक्तिगत स्वार्थबाट भरिएको हुन्छ, आफैलाई शीर्षस्थ खेलाडी मानेर कुश्ती लड्न तत्पर हुन्छ, ऊभित्र यति धेरै कोलाहल हुन्छ कि उसले अरूको वाणी सुन्नै सक्दैन। यस्तो व्यक्तिलाई सद्गुरुले एकै दृष्टिबाट चिन्नुहुन्छ । तर उहाँले अति नै विचित्र किसिमले विभिन्न रूपमा विभिन्न उपदेशहरूद्वारा सबैभन्दा पहिले त ऊभित्रको कोलाहललाई शान्त गर्नुहुन्छ, शान्त आत्मज्ञानको प्रतिष्ठा गराउनुहुन्छ। त्यसैले भनिन्छ–

**गुरु कुम्हार, शिष कुम्भ है,**
**गढि–गढि काढे खोट ।**
**हाथ सहारा दे रहे,**
**लागि न पावे चोट ॥**

गुरुले के गर्नुहुन्छ त भन्दा उहाँले हेर्नुहुन्छ कि शिष्य कस्तो माटोले बनेको छ, उसको प्रकृति कस्तो छ । उसको प्रकृतिअनुसार नै उसको भित्रको शक्ति र अनुभूतिहरूलाई बढावा दिनुहुन्छ किनकि गुरुसित त तीन साधन छन्– उपदेश, उदाहरण अर्थात् दृष्टान्त र प्रभाव । श्रेष्ठ कोटिका शिष्यले त केवल उपदेशबाटै बुझ्छन् । उपदेशभन्दा अधिक प्रभावशाली दृष्टान्त हुन्छ । गुरुदेवले त्यसलाई साक्षात् प्रत्यक्ष उदाहरण दिएर उसको भित्रको आत्मज्योतिलाई जगाउनुहुन्छ । जब यस उपायले पनि काम दिँदैन, तब प्रभाव नै एक मात्र उपाय हुन जान्छ जसमा गुरुले आफ्नो शक्ति प्रयासबाट, आफ्नो दिव्य शक्तिको माध्यमबाट शिष्यभित्र त्यो चीज हाल्नुहुन्छ जुन स्वयं छ। गुरुको कार्य त एक महान् दायित्वपूर्ण छ, उहाँ शिष्यहरूका लागि मित्र हुनुहुन्छ, पिता हुनुहुन्छ, शिष्यको आत्मालाई जगाउने आत्मा हुनुहुन्छ। श्रीमद्भागवतमा लेखिएको छ कि शिष्यमा यदि स्नेह छ भने गुरुदेवले गुप्तभन्दा गुप्त रहस्य पनि शिष्यलाई बताउनुहुन्छ ।

शिष्यका लागि एकै कार्य महत्त्वपूर्ण छ र त्यो हो– पूर्ण श्रद्धा र विश्वासका साथ गुरुको सेवा गर्नु। जहाँ श्रद्धा डगमगाउँछ, त्यहाँ शिष्यले आफ्नो शिष्यत्व निश्चय नै त्याग्छ। यदि शिष्यद्वारा गुरुको अपमान हुन्छ भने उसलाई भगवान् शङ्करको सेवाले पनि दोषमुक्त गर्न सक्दैन । यसैले शिष्यले गुरु बनाउनुभन्दा पहिले र गुरु कहाँ जानुभन्दा पहिले

अहङ्कारलाई त्यागेर निश्चल भावले जानुपर्छ । गुरु शिष्य सम्बन्धको बारेमा श्री यास्काचार्य लेख्छन्–

**स आतृणत्यविथेन कर्णावदुःख**
**कुर्वन्नमृतं सम्प्रयच्छन् ।**
**तं मन्येत पितरं मातरं च तस्मै ।**
**न द्रुह्येत् कतमच्च नाह ॥**

अर्थात्, गुरुले त सत्य नामक कान कोट्याउने सामग्रीबाट शिष्यको कानलाई खोल्नुहुन्छ, त्यसमा पहिलेदेखि भरिएका गलत कुराहरूलाई खोदेर निकाल्नुहुन्छ । त्यसपछि शिष्यमा अमृत भर्नुहुन्छ, यी दुई कार्य गर्नुहुने गुरु हुनुहुन्छ र गुरुसित द्रोह गर्नेको कतै पनि स्थान हुँदैन । त्यसैले शास्त्रमा भनिएको छ कि सोच-विचार गरेर योग्य गुरुको वरण गर्नुपर्छ ।

**मन्त्र तीर्थे द्विजे दैवे भैषज्ये गुरु सन्निधौ**
**यादृशी भाषम यस्य तादृशं फलभा प्नुयात**

मन्त्र, तीर्थ, द्विज, देव, देवज्ञ, भैषज अर्थात् वैद्य वा डाक्टर र गुरुलाई एकपटक अपानाइसकेपछि उहाँहरूप्रति आफ्नो भावनाको विकास गर्नुपर्छ र श्रद्धा तोड्नुहुन्न । स्पष्ट छ, जुन तीर्थस्थानमा जानाले शान्ति प्राप्त हुन्छ, त्यही तीर्थस्थान तपाईंको लागि उपयुक्त हुन्छ । जुन मन्त्रजपबाट अनुभूति हुन्छ, त्यो मन्त्र चाहे छोटो होओस् वा लामो तपाईंका लागि गुणकारी हुन्छ । जुन डाक्टर वा देवतामाथि पूर्ण आस्था तथा विश्वास हुन्छ, उहाँको उपचार मात्रै शरीरमा लाग्दछ । अतः यी छ प्रकारको स्थितिबाट देहका साथै मनको तारतम्य बस्नुपर्दछ । यसरी नै जुन गुरुलाई देख्नासाथ नै असीम शान्तिको अनुभव हुन्छ, उहाँलाई नै आफ्नो गुरु मानेर दीक्षा ग्रहण गर्नुपर्दछ ।

गुरुले शिष्यलाई जुन जपनीय मन्त्र दिनुहुन्छ, त्यस मन्त्र दिने कार्यलाई दीक्षा भनिन्छ । गुरुले शिष्यलाई उसको स्तरअनुसार शिक्षाको क्रम निर्धारित गर्नुहुन्छ । बिना दीक्षा प्राप्त शिष्य अधूरो नै हुन्छ अर्थात् बिना नाविकको भट्किएको नाउ समान हो । दीक्षा मन्त्र दिनासाथ गुरुले शिष्यको जीवनरूपी नाविकको स्थान ग्रहण गर्नुहुन्छ र उसलाई उसैको शक्तिबाट भवसागरको किनारासम्म पुऱ्याउनुहुन्छ । यसैले क्रमानुसार गुरुदेवसित दीक्षा ग्रहण गर्नुपर्दछ ।

केही शिष्य गुरुकृपालाई ऋण सम्झन्छन्, धनादिबाट यसलाई चुकाउने प्रयास पनि गर्दछन् । तर याद रहोस् कि गुरु-शिष्य सम्बन्ध कुनै व्यापार होइन । गुरुत्व त शिष्यको शरीरमा बहिरहेको रक्त समान हो । जबसम्म रगत बगिरहन्छ तबसम्म गुरुकृपाको ऋण रहन्छ । शिष्यले यो बुझ्नु पर्दछ कि जबसम्म उसको शरीरमा प्राण हुन्छ, तबसम्म गुरुले उसलाई कुनै पनि आदेश दिन सक्नुहुन्छ र उसले आज्ञाको पालन गर्नैपर्दछ । कुनै शिष्यले लेकति राम्रो लेखेका छन्–

**नास्था धर्मे न वसुनिचये नैव कामोपभोगे**
**यद्भाव्यं तद्भवतु भगवन्पूर्वकर्मानुरुपम् ।**
**एतत्प्रार्थ्ये मम बहुमतं जन्मजन्मातरेऽपि**
**त्वत्पादम्भोरुहयुगगता निश्चलाभक्तिरस्तु ॥**

हे भगवान् ! म धर्म, धन-संग्रह र काम भोगको आशा राख्दिन, पूर्व कर्मानुसार जे हुन्छ, त्यो होओस् । तर मेरो बारम्बार प्रार्थना छ कि जन्म जन्मान्तरसम्म पनि हजूरको चरणारविन्द युगलमा मेरो निश्चल भक्ति बनिरहोस् । जय गुरुदेव !

# सद्‌गुरु

विद्यालयमा पढ्दाखेरिको एउटा कविता याद आउँछ । त्यसको रचयिता हुनुहुन्छ– महाकवि लक्ष्मीप्रसाद देवकोटा । कविता यस्तो छ–

**कुन मन्दिरमा जान्छौ यात्री,**
**कुन मन्दिरमा जाने हो ?**
**कुन सामग्री पूजा गर्ने,**
**साथ कसरी लाने हो ?**

यी प्रश्नहरूको जवाफ गुरु बाहेक कसले दिन सक्छन् र ?

साँच्चै भन्ने हो भने, जन्मदेखि नै मानिसलाई गुरुको आवश्यकता हुन्छ । मानिसको पहिलो गुरु आमा हुन् । हिँड्न थालेपछि उसको दोस्रो गुरु बुबा हुन्छन् । दौडन थालेपछि तेस्रो गुरु हुन्छन् बाह्रखरी सिकाउने गुरु वा आचार्य । त्यसैगरी स्नातक, स्नातकोत्तर आदि पूरा गर्न अन्य गुरु चाहिन्छन् । त्यसैगरी, गृहस्थी वा अफिस सुचारु रूपले चलाउन ती क्षेत्रका विशेषज्ञहरूलाई एक किसिमले सल्लाहकार वा गुरुका रूपमा लिनुपर्दछ ।

यस्तै, अर्को पनि एउटा संसार छ जसलाई आध्यात्मिक संसार भनिन्छ । यसका गुरु हुनुहुन्छ– श्रोत्रिय ब्रह्मनिष्ठ, जसले भगवत् प्राप्त गरिसक्नु भएको हुन्छ । शास्त्र भन्दछ– उहाँ संसारमा सबैभन्दा महान् व्यक्ति हुनुहुन्छ । उहाँलाई सद्‌गुरु भनिन्छ । शास्त्रले फेरि भन्छ– सद्‌गुरु र भगवान्‌मा केही फरक हुँदैन ।

एउटा गोपनीय कुरा के छ भने, साधकले आफ्नो साधना गर्दा सद्‌गुरु साक्षात् भगवान् भनेर स्वीकार गर्नुपर्दछ । त्यसो गरेमा उसको आध्यात्मिक उन्नति दिन दुई गुणा रात चौगुणा बढ्दछ । तर साधकको कर्तव्य हुन्छ– सद्‌गुरुको निर्देशानुसार शतप्रतिशत आफ्नो साधनामा लागि पर्नु ।

शिवपुरीबाबा भन्नुहुन्थ्यो– ‘साधकले स्वधर्मबारे थाहा पाउनु महान् कुरा हो । तर त्यसको माहात्म्य पनि थाहा पाउनु अत्यन्त जरुरी छ । साधकले स्वधर्मको माहात्म्य थाहा पाउन यसलाई आफ्नो जीवनमा उतार्नु पर्दछ । साधकले जति मात्रामा यसलाई व्यवहारमा उतार्छ, त्यति मात्रामा ऊ सफल हुन्छ ।

उपनिषद् भन्दछ– इन्द्रियहरू घोडा, शरीर रथ, बुद्धि सारथी र आत्मा रथी हुन् । उदाहरणको लागि, महाभारतको युद्धमा रथी अर्जुनलाई साक्षात् भगवान् श्रीकृष्णले सारथी भएर बाटो देखाउनुभयो, अनि पाण्डवहरूको जीत भयो । सद्‌गुरु सारथी हुनुभएमा मात्र साधक विजयी हुन्छ । तर अफसोच, सबै साधकको भाग्यमा सद्‌गुरुको प्राप्ति भएको हुँदैन । त्यसैले ‘सद्‌गुरु नपाएसम्म शास्त्रलाई नै सद्‌गुरु मान्नू’ भनेर शास्त्र भन्दछ ।

एउटा अनौठो कुरामा साधकले ध्यान गर्दा अनुभव गर्दछन् । त्यो हो– संसार वा संसारसम्बन्धी कुराको खोजमा लाग्दा हात, गोडा आदि कर्मेन्द्रियहरू र अहङ्कार गर्न चाहिने आँखा,

नाक आदि बाहिरी ज्ञानेन्द्रियहरू तथा मन, बुद्धि, चित्त, अहङ्कारजस्ता भित्री ज्ञानेन्द्रियहरू आवश्यक हुन्छन् । तर प्रभुको खोजमा लाग्दा कुनै पनि इन्द्रियहरू काम लाग्दैनन् । प्रभुको ध्यान गर्दा आँखा चिम्लनु पर्दछ, हात गोडा खुम्च्याउनु वा पलेटी मारेर बन्द गर्नुपर्दछ, मन, चित्त, बुद्धि, अहङ्कारलाई कुण्ठित पार्दै लगेर आखिरमा निष्क्रिय अथवा निर्मूल नै पार्नुपर्दछ भन्ने होइन । सद्गुरु त जहिले पनि चाहिन्छ । त्यसकारण साधकले सद्गुरुको माहात्म्य बुझ्नु अत्यावश्यक छ ।

निम्न श्लोकहरूबाट सद्गुरुको माहात्म्य बुझ्न सकिन्छ–

**गुरुर्बह्मा गुरुर्विष्णु गुरुर्देवो महेश्वरः**
**गुरुरेव परमब्रह्म तस्मै श्री गुरवे नमः ॥१॥**
**अखण्डमण्डलाकारं व्याप्तं येन चराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ॥२॥**
**अज्ञानतिमिरान्धस्य ज्ञानाञ्जन शलाकया**
**चक्षुरुन्मीलितं येन तस्मै श्री गुरवे नमः ॥३॥**
**सर्वश्रुतिशिरोरत्न समुद्भासितमूर्तये**
**वेदान्ताम्बुज सूर्याय तस्मै श्री गुरवे नमः ॥४॥**
**स्थावरम् जंगमम् व्याप्तं येन कृत्स्नं चराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ॥५॥**
**चिद्रुपेण परिव्याप्तं त्रैलोक्यम् सचराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ॥६॥**
**न गुरोरधिकं तत्त्वम् न गुरोरधिकं तपम्**
**तत्त्वज्ञानात् परम् नास्ति तस्मै श्री गुरवे नमः ॥७॥**
**अनेकजन्मसंसिद्धो कर्मेन्धन विदाहिने आत्मज्ञानाग्नि दानेन तस्मै श्री गुरवे नमः ॥८॥ मन्नाथः श्री जगन्नान्थः मद्गुरु श्री जगद्गुरुमदात्मा सर्वभूतात्मा तस्मै श्री गुरुवे नमः ॥९॥**
**ज्ञानशक्ति समारुढो तत्त्वमाला विभूषितः**
**भुक्तिमुक्ति प्रदाता च तस्मै श्री गुरवे नमः ॥१०॥**
**गुरुर्आदिअनादिश्च गुरुः परम दैवतम्**
**गुरोर्परतरम् नास्ति तस्मै श्री गुरवे नमः ॥११॥**
**शोषणं भवसिन्धोश्च प्रापणं सारसम्पदम्**
**यस्य पादोदकं सर्वम् तस्मै श्री गुरवे नमः ॥१२॥**
**चैतन्य शाश्वतो शान्तो व्योमान्तीतो निरंजन**
**विन्दुनादोकलातीतो तस्मै श्री गुरवे नमः ॥१३॥**
**ब्रह्मानन्दं परमसुखदं केवलं ज्ञानमूर्तिम्**
**द्वन्द्वातीतं गगनसदृशं तत्त्वमस्यादिलक्षम् ॥१४॥**
**एकं नित्यं विमलमचलम् सर्वदा साक्षी भूतम्**
**भावतीतं त्रिगुणरहितं तस्मै श्री गुरवे नमः ॥१४॥**

**'गुरुर्बह्मा गुरुर्विष्णु गुरुर्देवो महेश्वरः'**

अर्थात् ब्रह्मा, विष्णु र महेश्वर गुरु नै हुनुहुन्छ ।

## गुरुर्ब्रह्मा

बाह्रखरी पढाउने गुरुले एउटा अबोध बालकलाई क, ख, ग सिकाउनुहुन्छ र त्यसको फलस्वरूप समय आएपछि त्यस विद्यार्थीले 'आचार्य' वा त्यो भन्दा माथिको उच्च शिक्षा हासिल गर्दछ । अनि नैतिक शिक्षा पाएर त्यही विद्यार्थी नैतिकवान्, आचारवान् मेधावान्, समर्थवान् आदि बन्न पुग्दछ ।

जसरी माटोलाई कुमालेले कुनै राजदरवारको बैठकको शोभा बढाउन लायक हुने राम्रो भाँडो बनाउँछ, सद्गुरुले पनि विद्यार्थीलाई त्यसरी नै भगवान्को दरवारमा प्रवेश पाउने गरी एउटा महापुरुष बनाउनुहुन्छ ।

त्यसकारण ब्रह्माण्डको सृष्टिकर्ता ब्रह्माजस्तै सद्गुरु पनि शिष्यको सृष्टिकर्ता हुनुहुन्छ ।

मातापिताले शरीर दिएर पहिलो जन्म दिनुहुन्छ भने गुरुले सद् शिक्षा दिएर शिष्यलाई अर्को जन्म दिनुहुन्छ ।

## गुरूर्विष्णु

सृष्टिपछि समस्त जीवको विष्णु भगवान्ले पालन गर्नुहुन्छ । गुरुले पनि आफ्नो विद्यार्थीको रक्षा गर्नुहुन्छ, समर्थवान् बनाइसकेपछि उचित समयमा भगवान्सँग बिहे पनि गरिदिनुहुन्छ ! त्यस अर्थमा गुरु विष्णु पनि हुनुहुन्छ ।

## गुरूर्देवो महेश्वरः

सृष्टिको संहारकर्ता भगवान् शिवझैँ गुरुले आफ्नो शिष्यको दुर्गुणलाई ध्वस्त पार्नुहुन्छ, दण्ड दिनु परे दण्ड पनि दिनुहुन्छ । त्यसकारण गुरु महेश्वर पनि हुनुहुन्छ ।

## गुरूरेव परमब्रह्म

अनन्तकोटिब्रह्माण्डनायक कर्तुमकर्तुमन्यथाकर्तुम्, सर्वज्ञ, सर्वशक्तिमान्, सर्वव्यापक, सर्वेश्वर, सर्वानन्दमय, अमृतस्वरूप, सर्वनियन्ता, सर्वाध्यक्ष, अव्यक्त, अरूप, निर्गुण, निराकार ब्रह्मले भक्तको प्रेमको वशमा परेर, व्यक्त, सगुण, साकार रूपमा प्रकट भएर दर्शन दिनुहुन्छ भनिन्छ । सद्गुरु पनि अधिकारी शिष्यको अगाडि आफ्नो सच्चा स्वरूपमा प्रकट भइदिनुहुन्छ, उसलाई भवसागरको पारी पनि लगिदिनुहुन्छ । त्यसकारण यस्ता गुरु परमब्रह्म पनि हुनुहुन्छ ।

यस सन्दर्भमा शिवपुरीबाबा भन्नुहुन्छ– 'तर कठिनाई छ, शिष्य आफैले सद्गुरु खोज्न सक्दैन, पाउँदैन पनि । कथंकदाचित् गुरु भेट्टाए पनि आफ्नो खोटो बुद्धिले जाँच गर्दछ, र श्रद्धाको कमीले गर्दा अर्को गुरुलाई अपनाउँछ वा अर्को बाटोमा लाग्छ । सद्गुरुले घुमाउरो तरिकाले शिष्यको श्रद्धा बढाइदिनुहुन्छ र अधिकारी शिष्य भएमा आफूलाई चिनाउने कृपा पनि गर्नुहुन्छ । अन्तमा शिष्य साँच्चैको अधिकारी बन्न सकेमा आफूजस्तै पनि बनाइदिनुहुन्छ ।

**अखण्डमण्डलाकारं व्याप्तं येन चराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ।**

अनन्तकोटि ब्रह्माण्डहरू अखण्ड मण्डलाकार रूपमा छन् जसमा चलफिर गर्ने र चलफिर नगर्ने दुई किसिमका जीवहरू छन् । दूधमा मख्खन लुकेर बसेजस्तै ब्रह्माण्डहरूमा भगवान् लुकेर, तर व्याप्त भएर, बस्नुभएको हुन्छ ! सद्गुरुले त्यस्तो 'दूध' लाई 'दही' बनाउनुहुन्छ, अनि त्यो 'दही' लाई मथेर भगवान् अथवा मख्खन प्रकट गर्ने विधि सिकाइदिनुहुन्छ ।

पूज्यपाद गुरुदेव
डॉ0 नारायण दत्त श्रीमाली

सद्गुरुलाई श्रद्धाको आँखाले हेरेमा उहाँको भौतिक शरीरमा भगवान् देख्न सकिन्छ । गुरुले देह छोडिसक्नु भए पनि अर्थात् अदृश्य भइसक्नु भए पनि, अखण्ड श्रद्धाभक्ति छ भने आफ्नो शिष्यलाई आवश्यक भएमा, सगुण, साकार रूपमा प्रकट भएर मार्गदर्शन गर्ने कृपा गर्नुहुन्छ । सद्गुरु भगवान्जस्तै सर्वव्यापक, सर्वशक्तिमान्, सर्वज्ञ र कृपासागर भएर लुकेर बस्ने भएको हुनाले यसो गर्न सक्नुहुन्छ ।

गोश्वामी तुलसीदासले लेख्नुभएको छ–

**जाके हृदय भगति जसि प्रीती**
**प्रभु तहँ प्रकट सदा तेहि रीती ।**
**फेरि–**
**हरि व्यापक सर्वत्र समाना ।**

**प्रेमते प्रकट होहिं मैं जाना ॥**

**देश काल दिसि किरि सिद्ध माही ।**

**कहछु सो कहाँ जहाँ प्रभु नाहीं ॥**

**अजगमय सब रहित विरागी ।**

**प्रेमते प्रभु प्रकटै जिमि आगि ॥**

अर्थात्, हरि सर्वत्र, समान भावले व्यापक हुनुहुन्छ । मेरो समझमा प्रेमल प्रकट हुनुहुन्छ । देश, काल, दिशा विदिशामध्ये कुन देश, कुन काल, कुन दिशा, कुन विदिशामा प्रभु हुनुहुन्न ? त्यो बताउनुहोस् । अध (गतिहीन) जगरूप (सबरूप) भए पनि प्रभुजी प्रेमले प्रकट हुनुहुन्छ । जस्तै, अग्नि सर्वत्र फैलिएको अदृष्ट छ तापनि मथनादि प्रयत्नले प्रकट (दृश्य) हुन्छ, त्यस्तै परमेश्वर व्यापक हुनुहुन्छ तापनि पूर्ण-प्रेमरूप प्रयत्नले प्रकट हुनुहुन्छ ।

**अज्ञानतिमिरान्धस्य ज्ञानाञ्जन शलाकया**
**चक्षुरुन्मीलितं येन तस्मै श्री गुरवे नमः ।**

गुरु शब्दलाई अलिकति केलाएर हेरूँ–

गुरु=गु+रु

गु=अन्धकार

रु=हटाउने शक्ति ।

अर्थात्, अज्ञानरूपी अन्धकारले बाटो हराइरहेको साधकको आँखामा गुरु 'गाजल' सरह हुनुहुन्छ । यो गाजलले शिष्यको आँखा खोलिदिन्छ । अनि ऊ सही बाटोमा लाग्छ । अज्ञानतिमिराच्छादित मार्गमा बाटो बिराएर उतायता दौडिरहेका बटुवाहरूलाई सही बाटो देखाउने महापुरुष गुरु नै हुन् ।

**सर्वश्रुतिशिरोरत्न समुदभासित मूर्तये**
**वेदान्ताम्बुज सूर्याय तस्मै श्री गुरवे नमः ।**

गुरु समस्त श्रुतिहरूको श्रीपेच, उज्ज्वल मूर्ति हुनुहुन्छ । श्रुति वेद भगवान्को श्रीमुखबाट निस्केको हो । यो शाश्वत छ, यसमा कुनै परिवर्तन हुँदैन ।

यो श्लोकमा कविले वेदान्तलाई कमलको रूपमा तुलना गर्नुभएको छ । कमल सूर्यको

प्रकाश पाए मात्र फुल्छ, फस्टाउँछ । त्यसैगरी गुरुरूपी सूर्यको प्रकाश पाएर वेदान्तरूपी कमल फुल्दछ । अर्थात्, भगवान्को गूढ तत्त्वलाई गुरुको प्रकाशले खुलाइदिन्छ, अनि मात्र शिष्यले बुझ्दछ ।

**स्थावरम् जंगमम् व्याप्तं येन कृत्स्नं सचराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ।**

हिँड्ने वा नहिँड्ने अर्थात् चर तथा अचर सम्पूर्ण जीवनमा फैलिएर बसेको एउटा गूढ तत्त्व छ, जसलाई दर्शन गराइदिने महापुरष गुरु नै हुनुहुन्छ । शास्त्रज्ञानले भगवान्बारे जानकारी मात्र दिन्छ, अनुभवात्मक ज्ञान अर्थात् विज्ञान वा विशेष ज्ञान दिन सक्दैन । गुरुको शरण नपरिकन यो सम्भव हुँदैन । गुरुको कृपा र शिक्षा-दीक्षाले मात्रै साधकले भगवत्चरणको दर्शन पाउँछ ।

सीख धर्ममा गुरुलाई 'गुरुद्वारा' पनि भनिन्छ । यसको गोप्य अर्थ हो– गुरु एउटा द्वार हो, ढोका हो, जसबाट साधक भित्र पसेपछि मात्र सिंहासनमा विराजमान भगवान्को दर्शन गर्न पाउँछ ।

**चिद्रूपेण परिव्याप्तं त्रैलोक्यम् सचराचरम्**
**तत्पदं दर्शितं येन तस्मै श्री गुरवे नमः ।**

चर र अचर प्राणीमा मात्र कहाँ हो र ! तीनै लोक भु:, भुव:, स्व: मा चैतन्य रूपले व्याप्त भई बसिरहनु भएको छ भगवान् । जीवहरूको चैतन्यतालाई चेतनता दिने तत्त्व पनि उहाँ नै हुनुहुन्छ । त्यस्तो चिद्स्वरूप परमात्माको दर्शन गराइदिने व्यक्ति श्री गुरु हुनुहुन्छ ।

**न गुरोरधिकं तत्त्वम् न गुरोरधिकं तपम्**
**तत्त्वज्ञानात् परम नास्ति तस्मै श्री गुरवे नमः ।**

यो गुरुतत्त्वभन्दा अरू कुनै तत्त्व वा तपस्या पनि छैन, किनभने परम उत्कर्षमा पुग्दाखेरि थाहा हुन्छ– गुरु तत्त्व र भगवान् अलग अलग तत्त्व होइन रहेछ, दुवै एउटै तत्त्व रहेछन् । यो तत्त्वज्ञानभन्दा ठूलो अरू केही पनि छैन ।

**अनेक जन्मसंसिद्धो कर्मेन्धन विदाहिने**
**आत्मज्ञानाग्नि दानेन तस्मै श्री गुरवे नमः ।**

जीवले अनन्त जन्महरू लिइसकेको छ । प्रत्येक जन्ममा एउटा एउटा मात्रै पुण्य र पाप गरेमा पनि उसले अनन्त पाप पुण्यको प्रारब्ध राशि जम्मा गरिसकेको हुन्छ । यसलाई कर्मबन्धन भनिन्छ । यो अनन्त भण्डारको प्रारब्ध पूँजी भएर बसिरहेको हुन्छ । यसलाई 'भोगेर सिध्याउँछु' भनेर भोगे पनि अनन्त पूँजी बाँकी नै रहेको हुन्छ किनभने अनन्तबाट अनन्त घटाएमा अनन्त नै बाँकी रहन्छ, अनन्तलाई अनन्तले भाग गरेमा पनि अनन्त नै बाँकी रहन्छ !

अनि प्रश्न आउँछ– यसलाई निर्मूल कसरी गर्ने होला ? आत्मज्ञानको आगोले मात्र यसलाई खरानी पार्न सकिन्छ । यो आत्मज्ञान कसरी पाउने ? भगवत् प्राप्त गरेर । भगवत् प्राप्त कसरी गर्ने ? सद्‌गुरुको कृपाले । सद्‌गुरुद्वारा मात्र यो काम हुन्छ ।

अघि भने जस्तै, प्रारब्ध सञ्चित हो– दाउरा जस्तै ! अथवा 'मुद्दति' खातामा रहेको 'पैसा' जस्तै ! अर्थात् काम चलाउनलाई यसबाट निकाली 'चालू' खातामा राखेकोलाई मात्र व्यवहारमा लगाइन्छ । अनि तेस्रो खाता 'चल्ती' खाता पनि छ जसमा मनुष्यले दिनहुँ गर्ने अकर्म वा विकर्मरूपी प्रारब्ध जम्मा हुन्छ । भगवान्‌को दर्शन पाइसकेको जीवको यस्तो चल्ती खाता हुँदैन किनकि ऊ सक्षम भइसकेको हुन्छ, त्यसैले नयाँ प्रारब्ध बनाउँदैन ।

**मन्नाथः श्री जगन्नाथः मद्‌गुरू श्री जगद्‌गुरू**
**मदात्मा सर्वभूतात्मा तस्मै श्री गुरवे नमः ।**

मेरो गुरु सम्पूर्ण जगतको मालिक हुनुहुन्छ । उहाँ सर्वज्ञ, सर्वशक्तिमान् सर्वेश्वर, सर्वव्यापी हुनुहुन्छ । उहाँ मेरो आत्मा हुनुहुन्छ र सर्वभूतात्मा अर्थात् सबै जीवहरूको आत्मा पनि हुनुहुन्छ । त्यसैले जीव कल्याणको लागि जे गर्नुपर्दछ, उहाँलाई थाहा हुन्छ र त्यसअनुसार गर्नुहुन्छ ।

**ज्ञानशक्ति समारूढो तत्त्वमाला विभूषितः**
**भुक्तिमुक्ति प्रदाता च तस्मै श्री गुरवे नमः ।**

साधकले थाहा पाउनु पर्ने कुरा हो– हरेक देवताको एउटा एउटा वाहन हुन्छ । गुरुको पनि एउटा वाहन हुन्छ, त्यो हो– ज्ञानशक्ति जसमाथि उहाँ आरुढ हुनुहुन्छ । उहाँको तत्त्वमाला– २४ तत्त्व अर्थात् पञ्च महाभूत, पञ्च तन्मात्र, पञ्च ज्ञानेन्द्रियहरू, पञ्च कर्मेन्द्रियहरू, अनि मन-बुद्धि-चित्त-अहङ्कार । भुक्तिरूपी सांसारीक

सुख, ऐश्वर्य आदि र मुक्तिरूपी परम गति दुवै सद्गुरुको मुठ्ठीमा छन् । त्यसकारण साधकले भुक्ति चाहेमा भुक्ति र मुक्ति चाहेमा मुक्ति दिन उहाँ समर्थ हुनुहुन्छ । यस्ता महान् गुरुमा मेरो नमस्कार छ ।

**गुरुआदिअनादिश्च गुरू परम दैवतम्**
**गुरोर्परतरम् नास्ति तस्मै श्री गुरवे नमः ।**

भगवान्को आदि र अन्त नभए जस्तै गुरु तत्त्वको पनि आदि र अन्त छैन । फेरि गुरु नै सर्वोच्च देवता हुनुहुन्छ । त्यसकारण गुरुभन्दा माथि कोही पनि छैन, कुनै तत्त्व छैन ।

**शोषणं भवसिन्धोश्च प्रापणं सारसंपदम्**
**यस्य पादोदकं सर्वम् तस्मै श्री गुरवे नमः ।**

मेरो गुरको श्रीपाद पखालेको पवित्र जल समान संसार सागरको सार छ । यो जल गुणमा र तत्त्वमा महान् छ । त्यस्तो गुरुमा मेरो वन्दना छ ।

**चैतन्यो शाश्वतो शान्तो व्योमान्तीतो निरंजन**
**विन्दुनादोकलातीतो तस्मै श्री गुरवे नमः ।**

गुरु सर्वज्ञ हुनुहुन्छ अर्थात् शाश्वत चैतन्य हुनुहुन्छ, शान्त हुनुहुन्छ र सबै ब्रह्माण्डभन्दा पर, दृश्यमान् जगत्भन्दा पर हुनुहुन्छ । सद्गुरु भौतिक शरीरमा सीमित हुनुहुन्न । यही कारणले उहाँ साक्षात् ब्रह्म हुनुहुन्छ । साथै, निर्विकार, निष्क्रिय, निराकार, अज, निर्गुण पनि हुनुहुन्छ ।

**ब्रह्मानन्दं परमसुखदं केवलं ज्ञानमूर्तिम्**
**द्वन्द्वातीतं गगनसदृशं तत्त्वमस्यादिलक्षम् ।**
**एकं नित्यम् विमलमचलम् सर्वदा साक्षी भूतम्**
**भावातीतं त्रिगुण रहितं तस्मै श्री गुरवे नमः ।।**

आनन्दको चरम परम सीमा ब्रह्मानन्द हो । यो चरम सुख मात्रै होइन, ज्ञानको सजीव तथा मूर्तस्वरूप हो । त्यो गुरु तत्त्व नै हो । घाम छायाँ, सर्दी-गर्मी, प्रिय-अप्रिय, दुःख-सुख, जन्म-मृत्यु आदि द्वन्द्व हुन् । यी द्वन्द्वहरूबाट गुरु मुक्त आकाशजस्तो हुनुहुन्छ अर्थात् उहाँ निर्विकार हुनुहुन्छ, एकनाश हुनुहुन्छ, कुनै द्वन्द्वले उहाँलाई प्रभाव पार्न सक्दैन । सदा एक मात्र, अचल, निर्मल त्यो तत्त्व साक्षीस्वरूप हुनुहुन्छ ।

अर्को शब्दमा भन्ने हो भने, वेदमा भनिएका तत्तत्त्व, त्वंतत्त्व र अहंतत्त्व सबै एउटै तत्त्व हुन् । यो नित्य छ, निर्मल छ, अचल र अपरिवर्तनीय छ, सधैं साक्षी स्वरूप भएर बस्नुभएको छ । सम्पूर्ण भावनाहरूको माथि, मायारूपी तीन गुण सत्त्व, रज र तमहरूभन्दा पर, उनीहरूले भेट्टाउन नसक्ने गरी बस्नुभएको छ । गुरुतत्त्व त्यही हो । यस्तो सद्गुरुमा मेरो प्रणाम छ ।

सारांशमा भन्ने हो, गुरुले ८४ लाख जुनीको बन्धनबाट छुटाएर हामीलाई आवागमनको चक्रबाट स्वतन्त्र गरिदिनुहुन्छ । यति मात्र हो र ! आफूसरह पनि बनाइदिनुहुन्छ । त्यसकारण उहाँभन्दा महान् को होला ?

***(स्रोतः श्री शिवपुरी बाबाको शिक्षामा आधारित 'प्रभुको खोजमा...', डा. योगन्द्रभक्त श्रेष्ठ)***

# श्री गुरु पादुका पंचकम्

ॐ नमो गुरूभ्यो गुरूपादुकाभ्यो
नमः परेभ्यः परपादुकाभ्यः
आचार्यसिद्धेश्वरपादुकाभ्यो
नमो नमः श्रीगुरूपादुकाभ्यः ॥१॥

ऐंकार ह्रींकाररहस्ययुक्त
श्रींकारगूढार्थ महाविभूत्या ।
ओंकारमर्म प्रतिपादिनीभ्यां
नमो नमः श्रीगुरूपादुकाभ्याम् ॥२॥

होत्राग्नि होत्राग्निहविष्यहोतृ-
होमादिसर्वाकृतिभासमानं ।
यद् ब्रह्म तद्बोधवितारिणीभ्यां
नमो नमः श्रीगुरूपादुकाभ्याम् ॥३॥

कामादिसर्पव्रजगारुडाभ्यां
विवेकवैराग्यनिधिप्रदाभ्यां ।
बोधप्रदाभ्यां द्रुतमोक्षदाभ्यां
नमो नमः श्रीगुरूपादुकाभ्याम् ॥४॥

अनंतसंसारसमुद्रतार
नौकायिताभ्यां स्थिरभक्तिदाभ्यां
जाड्याब्धिसंशोषणवाडवाभ्यां
नमो नमः श्रीगुरूपादुकाभ्याम् ॥५॥

# सूर्य उपासना

ऋग्वैदिक युगदेखि नै सूर्य पूजाको परम्परा पाइन्छ । ऋग्वेदमा दश सूक्तले स्वतन्त्र रूपमा सूर्यको वर्णन गरेका छन्। ऋग्वेदमा उनलाई सात घोडे रथमा चढी हिँड्ने देवताको रूपमा चित्रित गरिएको छ । ऋग्वेदमा कतै कतै उनलाई सविता पनि भनिएको छ । द्यौसलाई सूर्यका पिता र अदितीलाई उनकी आमा भनिएको पाइन्छ । सूर्यलाई समस्त जगतको आत्मा भनिएको छ । सूर्यको उपासना पाँच रूपमा भएको पाइन्छ– सूर्य, सविता, मित्र, पुषन र विष्णु। सूर्यको प्रार्थना गायत्री मन्त्र उच्चारण गरेर गरिन्छ। सूर्यलाई देवताहरूका पुरोहित मानिएको छ। गृहसूत्रहरूमा सूर्यपूजा 'श्री' सम्पत्ति र कीर्तिका लागि गरिने कुरा बताइएको छ। रामायण युद्ध काण्डमा ऋषि अगस्त्यले रामलाई रावणसँगको युद्धमा जितवाजी पाउन 'आदित्य हृदय स्तोत्र' सुनाएको उल्लेख छ । साथै सूर्यलाई ब्रह्मा, विष्णु र शिवका पनि स्वामी भनिएको छ। महाभारतमा सूर्यका धेरै उपासकहरू भएको, सौरजहरूद्वारा उपासना गरिएको र कुष्ठरोगबाट मुक्ति पाउन सूर्य उपासना गरेको चर्चा महाभारतमा छ। रामायण र महाभारत दुवै महाकाव्यले सूर्यलाई देवताहरूका पनि स्वामी, प्राणी मात्रका आत्मा, सबै कुराको हेतु, स्वयम्भू वा अजन्मा भनी उल्लेख गरेका छन् । प्राय:जसो पुराणहरूमा सूर्यलाई विष्णुरूप मानिएको छ । तन्त्रहरूमा पनि खास गरी 'सम्मोहन तन्त्र'ले सूर्य सम्प्रदायको उल्लेख गरेको पाइन्छ । तन्त्रशास्त्रमा सूर्यको उपासना विधिको वर्णन पाइन्छ। कालान्तरमा सूर्यसम्बन्धी सम्प्रदायहरू भारतमा ज्यादै प्रचलित भए।

पुराण युगमा भारतमा सूर्यका मूर्तिहरू प्रशस्त बने । भविष्यपुराणले कृष्ण र जाम्बवती पुत्र साम्बले सिन्ध प्रदेशमा चन्द्रभागा नदी किनारमा सूर्यको प्रथम मन्दिर बनाएको विवरण दिन्छ। यस मन्दिरको पुजारीको रूपमा शकद्वीप निवासी 'मग ब्राह्मणहरू' बोलाइएको प्रसङ्ग भविष्यपुराणमा छ। मग जाति इरानका निवासी थिए र व्यावहारिक रूपमा उनीहरूले नै भारतमा आएर सूर्य उपासनाको प्रचार गरे भनेर डा. जयशङ्कर मिश्रले लेखेका छन्। चन्द्रभागा नदी किनारमा भएको मुल्तानको सूर्य मन्दिरको उल्लेख ह्वेनसाङ्गले पनि गरेका छन् । ह्वेनसाङ्गका अनुसार यो सूर्य मूति स्वर्ण निर्मित र बहुमूल्य रत्नहरूद्वारा अलंकृत थियो ।

वराहामिहिरले लेखेको 'विक्रमोवर्षिय'मा पनि सूर्य पूजाको निमित्त 'मग' ब्राह्मणहरूलाई नै पूजारी बनाइएको चर्चा पाइन्छ । सूर्यका अनेकौं मूर्तिहरू मथुरा संग्रहालय र भारतकला भवन काशी मा राखिएका पाइन्छन् । हुणहरूका शासक 'तारेमाण' सूर्य उपासक थिए भने 'मिहिरकुल' ले सूर्यको मन्दिर समेत बनाएका थिए। थानेश्वरका वर्धन राजाहरू सबै सूर्य उपासक थिए । तेह्रौं शताब्दीमा बनेको उडिसाको 'कोणार्क'को सूर्य मन्दिर अत्यन्त भव्य र विशाल मानिन्छ । सूर्य सम्प्रदायका अनुयायीहरू निधारमा रातो चन्दन लगाउँछन् र सूर्यको आकृति बनाउँछन्। उनीहरू बिहान र बेलुकी दुई पटक सूर्यको पूजा गर्छन् र आइतवार सूर्यको व्रत राख्दछन्।

सूर्य उपासनाको परम्परा उपत्यकामा लिच्छवि वराहामिहिरले लेखेको 'विक्रमोवर्षिय'मा पनि सूर्यपूजाको निमित्त 'मग' ब्राह्मणहरूलाई नै पूजारी बनाइएको चर्चा पाइन्छ । सूर्यका नेकन मूर्तिहरू मथुरा संग्रहाल र भारतकला भवन काशी मा राखिएका पाइन्छन्। हुणहरूका शासक 'तारेमाण' सूर्य उपासक थिए भने 'मिहिरकुल' ले सूर्यको मन्दिर समेत बनाएका थिए। थानेश्वरका वर्धन राजाहरू

सबै सूर्य उपासक थिए । तेह्रौं शताब्दीमा बनेको उडिसाको 'कोणार्क'को सूर्य मन्दिर अत्यन्त भव्य र विशाल मानिन्छ । सूर्य सम्प्रदायका अनुयायीहरू निधारमा रातो चन्दन लगाउँछन् र सूर्यको आकृति बनाउँछन् । उनीहरू बिहान र बेलुकी दुई पटक सूर्य पूजा गर्दछन् र आइतवार सूर्यको व्रत राख्दछन् ।

प्रष्ट रूपमा सूर्यको आकृति अंकित भएको पाइन्छ । त्यसबेलाका लिच्छवि राजाहरू पशुपतिका भक्त थिए तर उनीहरूको पशुपति मुद्रामा सूर्यका चित्र उत्कीर्ण भएको हुनाले सूर्य उपासनाको व्यापकता लिच्छविकालमै भएको अनुमान लगाउन सकिन्छ । धनवज्र वज्राचार्यका अनुसार लिच्छविकालमा शैव, वैष्णव र बौद्ध सम्प्रदाय जतिकै सौर सम्प्रदाय प्रचलित नभए पनि त्यस समयमा सूर्य उपासनाको प्रचलन भने थियो भन्ने कुरा टेबहालको गृहमित्रको अभिलेखबाटै प्रष्ट हुन्छ ।

पूर्वमध्यकाल वास्तवमा अभिलेखयुक्त र तिथिमिति भएका सूर्य मूर्तिहरू बनाइने र सूर्यमन्दिरहरूको निर्माण गरिने युग थियो । लिच्छविकालको लवगत्तैपछि सौर्य उपासना अझ बढी प्रचलित भएको देखिन्छ । यसबेलाको वि.सं. ११२१ को प्रद्युम्न कामदेवको पालामा स्थापित पाटन थापाहिटीको सूर्य मूर्ति, वि.सं. ११३९ मा स्थापित पाटन सौगल टोलको सूर्य मूर्ति र वि.सं. १२१५ को नक्सालको सूर्य मूर्ति (डा. जगदिश चन्द्र रेग्मीले यस मूर्तिलाई वि.सं. १११५ को मान्नु भएको छ) आदिले त्यसबेला सौर सम्प्रदाय वा सूर्य उपासना ज्यादै प्रचलित भएको प्रमाणित गर्दछ । पूर्वमध्यकालमा पनौती क्षेत्रको त्रिवेणी इलाकामा सूर्यपूजाको परम्परा बढी रहेको थियो भनेर मेरी श्लसरले बताएकी छन् । त्यसबेला सूर्यका मूर्तिहरू जम्मा दुई प्रकारका देखिन्छन् । प्रथममा उत्तर भारतमा पाइने श्रीपेच, बुट र कोट लगाएको शैलीमा निर्मित सूर्य मूर्तिहरू पर्दछन् । यो शैलीमा बनेका सूर्य मूर्तिहरू कुनै कुनैमा 'शक' निर्माण शैलीको प्रभाव (Scythian mode) देखा पर्दछ । अर्को प्रकारका सूर्य मूर्तिहरू नाङ्गा पैताला र धोती लगाएको शैलीमा निर्मित भएको पाइन्छ । यो शैलीलाई श्लसरले दक्षिण भारतीय शैली मान्नुभएको छ ।

पछिल्लो मध्यकालमा पनि सूर्यको पूजा उपासना गर्ने परम्परा विद्यमान नै रह्यो । यसकालका सात घोडाले तानेको रथमा विराजमान सूर्यका मूर्तिहरू पाइन्छन् । यस्ता सूर्यमूर्तिहरूमा सूर्यसँग अरूण, उषा र प्रत्युपालाई पनि चित्रित गरिएको छ । पछिल्लो मध्यकालमा घर र मन्दिरका झ्यालहरूमा सूर्यको आकृति अंकित गराउने परम्परा पनि विकसित भयो । फलस्वरूप यस कालमा निर्मित 'सूर्य झ्यालहरू अद्यापि कान्तिपुर, ललितपुर र भक्तपुरका मन्दिर, घरहरूमा देख्न सकिन्छ । यसको सबैभन्दा राम्रो उदाहरण कान्तिपुरको कुमारी घरको सूर्य झ्याल हो । डा. जगदीशचन्द्र रेग्मीले यसकालका चार शिलालेखहरूलाई त्यसताका सूर्य पूजा लोकप्रिय रहेको प्रमाणका रूपमा प्रस्तुत गर्नु भएको छ । यी चार मध्ये पनि वि.सं. १४५० को वनेपाबाट प्राप्त अभिलेखमा सूर्यको स्तुति गरिएको छ । जसमा 'कर्माचार्ययोग' शब्द परेको छ । यसै आधारमा रेग्मीले कर्माचार्यहरूलाई त्यसबेलाका सूर्य उपासक वर्गमा अड्कल गर्नुभएको छ ।

जय गुरुदेव !

*(सन्दर्भ : हिन्दु समाज र धर्म)*

**ॐ विश्वानि देव सवितर्दुरितानि परासुव ।**
**यद् भद्रं तन्न आ सुव ।।**

*(ऋग्वेद ५।८२।५, शुक्लयजुर्वेद ३०।३)*

**समस्त संसारलाई उत्पन्न गर्नुहुने, सृष्टि, पालन, संहार गर्नुहुने र विश्वमा सर्वाधिक दैदिप्यमान एवं जगतको शुभकर्ममा प्रवृत्त गराउनु हुने हे परब्रह्मस्वरुप सवितादेव ! हजुर हाम्रा समस्त आधिभौतिक, आधिदैविक, आध्यात्मिक दुष्कर्महरुलाई टाढा लगिदिनुहोस् तर जुन भद्र छ, कल्याण छ, श्रेय छ, मंगल छ, ती कुराहरु हाम्रा लागि, विश्वका हामी सबै प्राणीहरुका लागि चारैतिरबाट लिएर प्रदान गर्नुहोस् ।**

स्कन्दपुराणअनुसार गुरुगीता ग्रन्थको प्रत्येक श्लोक केवल श्लोक मात्रै नभएर आफैंमा मन्त्र हो । प्रत्येक श्लोकहरु संस्कृतका अक्षर मात्र नभएर आफैंमा मन्त्रमय छन्, चैतन्यमय छन्। यसै दिव्य र पवित्र गुरुगीताबाट केही श्लोक प्रस्तुत गरिएको छ–

**गूढ विद्या जगन्माया**
**देहे चाज्ञान सम्भवः ।**
**उदयं स्व प्रकाशेन**
**गुरु शब्देन कथ्यते ॥**

भावार्थ : चाहे जतिसुकै गूढ विद्या किन नहोस्, जस्तै कठिन साधना नै किन नहोस् अथवा जतिसुकै अज्ञानी शिष्य नै किन नहोस् यदि उसले श्रद्धाले एकपटक 'गुरु' शब्द उच्चारण गर्दछ भने मनमा स्वत: नै आत्मज्योति प्रकाशित हुन्छ । यस ज्योतिको माध्यमबाट समस्त गूढ विद्याहरू र साधनाहरू स्वत: नै सिद्ध हुन्छन् । ती गूढ विद्याहरू गुरुको माध्यमबाट नै उद्भासित हुँदै आइरहेका छन् । तसर्थ, जीवनमा गुरुको उपादेयता सिद्ध हुन्छ ।

**काशी क्षेत्रं तन्निवासो**
**जाह्नवी चरणोदकम् ।**
**गुरुः विश्वेश्वरः साक्षात्**
**तारकं ब्रह्म निश्चितम् ॥**

भावार्थ : काशीवास गर्नाले तथा भगवान् शिवको पूजा गर्नाले जस्तो फल प्राप्त हुन्छ, गंगास्नान तथा गंगाजल सेवनले जस्तो सिद्धि र सफलता प्राप्त हुन्छ, ब्रह्मा, विष्णु तथा महेशको सेवा तथा साधनाले जस्तो फल प्राप्त हुन्छ, ती सबै केवल गुरुको चरणोदक पान मात्रैले पनि प्राप्त हुन जान्छ । गुरुचराणमृतले साधकको सम्पूर्ण जन्म-जन्मान्तरीय दोषहरूलाई नाश गरेर उसलाई ब्रह्ममय बनाइदिन्छ ।

**त्वं पिता त्वं च मे माता**
**त्वं बन्धुत्वं च देवता ।**
**संसार प्रति बोधार्थं**
**तस्मै श्री गुरवे नमः ॥**

भावार्थ : हे गुरुदेव ! हजूर नै सबैका आमा, बुबा, बन्धु तथा देवता हुनुहुन्छ । आमाबुवाले शरीरलाई जन्म दिनुहुन्छ तर संस्कार दिनुहुन्न । हजूरले शिष्यलाई संस्कार दिनुहुन्छ । तसर्थ, हजूर शिष्य तथा साधकका सर्वस्व हुनुहुन्छ । यस सम्पूर्ण संसार तथा ब्रह्माण्डलाई चिन्ने प्रतीति तथा सम्पूर्ण ब्रह्माण्डमा विचरण गर्ने ज्ञान हजूरले मात्रै शिष्यलाई प्रदान गर्न सक्नुहुन्छ । तसर्थ, हे गुरुदेव ! हजूरलाई श्रद्धायुक्त हृदयबाट प्रणाम छ ।

**शिवे कुद्धे गुरुस्त्राता**
**गुरो कुद्ध शिवो न हि ।**
**तस्मात् सर्व प्रयत्नेन**
**श्रीगुरोः शरणं व्रजेत् ॥**

भावार्थ : यदि भगवान् शिव कुद्ध हुनुभएमा गुरुले उहाँको कोधबाट जोगाउन सक्नुहुन्छ । यदि अन्य देवता कुद्ध हुनुभएमा पनि गुरुले उहाँहरूबाट रक्षा गर्न सक्नुहुन्छ । यदि सम्पूर्ण देवताहरू मिलेर शिष्यमाथि प्रहार गर्न थाले भने पनि गुरु उहाँहरूबाट शिष्यको रक्षा गर्न सक्नुहुन्छ । तर गुरु नै कुद्ध हुनुभयो भने भगवान् शिवले पनि त्यस कोधबाट बचाउन सक्नुहुन्न । गुरु कुद्ध हुनुभयो भने शिष्यका समस्त जीवनका सम्पूर्ण पूण्य क्षीण हुन जान्छन् ।

**श्री गुरोः परमं रूपं**
**विवेक चक्षुषोर्मतम् ।**
**मन्दभाग्या न पश्यन्ति**
**अंधो सूर्योदयं यथ ॥**

भावार्थ : गुरुको रूप समस्त देवताहरूको भन्दा पनि महत्त्वपूर्ण छ, उहाँ नै अज्ञानतालाई हटाएर पूर्णज्ञान दिन समर्थ हुनुहुन्छ । तर जो मन्दभाग्य छ, अभागी छ, उसले गुरुको त्यो रूपलाई देख्न सक्दैन । जसरी एउटा अन्धोले सूर्योदय देख्न सक्दैन, त्यसरी नै मन्दभाग्य, अभागीले गुरुलाई देखेर पनि अथवा गुरुको समीपमा पुग्दा पनि मनमा शंका अथवा भ्रम राख्छ ।

**अखंड मण्डलाकारं**
**व्याप्तं येन चराचरम् ।**
**तत् पदं दर्शितं येन**
**तस्मै श्री गुरवे नमः ॥**

भावार्थ : उहाँ अखण्ड हुनुहुन्छ, भगवान् सूर्य समान् तेजस्वी हुनुहुन्छ, उहाँ सम्पूर्ण विश्वमा व्याप्त हुनुहुन्छ, उहाँ जड र चेतन दुवैलाई सिद्धि प्रदान गर्न समर्थ हुनुहुन्छ, उहाँ देवतुल्य हुनुहुन्छ, उहाँ चिदानन्दमयस्वरूप हुनुहुन्छ, निर्मल र शान्त हुनुहुन्छ, उहाँ सही अर्थमा पूर्णब्रह्म हुनुहुन्छ । त्यसैले, उहाँको पाउको दर्शन गर्नु, ढोग्नु, पूजा गर्नु, चरणोदक लिनु नै शिष्यजीवनको परम सौभाग्य हो तथा उसको जीवनको पुण्य हो ।

यस्ता श्री गुरुलाई पूर्ण भक्तिभावका साथ नमस्कार छ ।

**ध्यानमूलं गुरोर्मूर्तिः**
**पूजामूलं गुरोः पदम् ।**
**मंत्र मूलं गुरोर्वाक्यं**
**मोक्षमूलं गुरोः कृपा ॥**

भावार्थ : गुरु-मूर्ति नै शिष्यको ध्यानको मूल हो, उसले ध्यान गर्दा कुनै देवताको चित्र आउनुहुन्न, उसका आँखा सामुन्ने त आफ्ना गुरुको चित्र मात्रै आउनुपर्छ । शिष्यले गुरुको पाउको मात्र पूजा गर्नुपर्छ, उसको जीवनमा गुरुमन्त्र बाहेक अन्य कुनै मन्त्र हुँदैन र अनय कुनै मन्त्रको साधना गर्ने आवश्यकता पर्दैन । जीवन-मृत्युको झन्झटबाट मुक्ति प्रदान गर्ने एक मात्र आधार गुरुकृपा हो ।

**प्रातः शिरसि शुक्लाब्जे**
**द्विनेत्रं द्विभुजं गुरुम् ।**
**वराभय प्रदं शान्तं**
**स्मरेत्तं नम पूर्वकम् ॥**

भावार्थ : बिहान उठेर ओछ्यान छोड्नु अगावै शिष्यले आफ्नो सहस्रदलकमलमा दुई नेत्र, दुई भुजायुक्त तथा अभय प्रदान गर्न समर्थवान् शान्तस्वरूप गुरुको नामोच्चारणपूर्वक ध्यान, मनन एवं चिन्तन गर्नुपर्छ । जो शिष्य भक्तिभावले गुरुलाई दण्डवत् गर्दछ, उसका समस्त प्रकारका भय, दुःख एवं तनाव स्वतः समाप्त हुन्छन् र उसको जीवनमा सबै प्रकारले पूर्णता प्राप्त हुन्छ ।

**आनन्द मानन्द करं प्रसन्नं**
**ज्ञानस्वरुपं निजबोधयुक्तम् ।**
**योगीन्द्रमीडयं भवरोग वैद्यम्**
**श्रीमद्गुरुं नित्यमहं भजामि ॥**

भावार्थ : नित्य आनन्द प्रदान गर्ने, शिष्यलाई तनावरहित बनाएर प्रसन्नता एवं जीवनमा पूर्णता प्रदान गर्ने, शिष्यको जीवनलाई ज्ञानको प्रकाशले जाज्वल्यमान बानाएर आफ्नो स्वरूपको बोध गराउने, योगीहरूमा श्रेष्ठ, शिष्यलाई समस्त भवरोगहरूबाट कुशल वैद्य समान् मुक्ति प्रदान गर्नमा समर्थ, मनुष्यत्वबाट देवत्व प्रदान गर्न समर्थ, यस्ता सद्गुरुदेवलाई म नित्य भक्तिभावले हृदयदेखि नै साष्टांगदण्डवत् प्रणाम गर्दछु ।

जय गुरुदेव !

# शरीरमा सद्गुरुको निवास

कोही आदरणीय हुन्छन्, कोही माननीय हुन्छन्, कोही वन्दनीय हुन्छन्, कोही प्रशंसनीय हुन्छन्। तर सत्यस्वरूपमा जगाउने, तीनै तापबाट बचाउने साक्षात् परब्रह्म-परमात्मास्वरूप तत्त्ववेत्ता भगवान् व्यास पूजनीय हुनुहुन्छ । चाहे मुनि शुकदेवको रूपमा व्यास होऊन् वा परमहंस रामकृष्णको रूपमा व्यास होऊन्..., व्यास कुनै व्यक्तिको नाम होइन । व्यास त्यसलाई भनिन्छ जसले हाम्रा जीवनमा छरपष्ट धाराहरूलाई सुव्यवस्थित गर्न सक्छ, हामीभित्र लुकेका सम्पदालाई खोल्ने रहस्य बताउन सक्छ । हामीलाई उठाउने आध्यात्मिक व्यवस्था थाहा हुने आध्यात्मिक अनुभवसम्पन्न महापुरुष नै व्यास हुन् ।

गुरु तीन प्रकारका हुन्छन्–

१. देवगुरु २. सिद्धगुरु ३. मानवगुरु ।

देवगुरु– देवर्षि नारदजस्ता देवगुरु हुनुहुन्छ, वृहस्पति हुनुहुन्छ । सिद्धगुरुले कहिलेकाहीँ कुनै परम पवित्र, परम सात्त्विक व्यक्तिलाई मार्गदर्शन दिनुहुन्छ । जस्तै, गुरु दत्तात्रय । तर मानवगुरु त हामीबीच रहेर, हामीले झैँ लेखी-पढी, खाँदै-पिउँदै, हाँस्दै-रुँदै यात्रा गर्नुहुन्छ, पाइला-पाइलामा विघ्न-बाधाहरूलाई सहँदै त्यसको निराकरण गर्दै यात्रा गर्नुहुन्छ ।

***जब गुरूकृपा हुन्छ तब मन निर्मल हुन जान्छ र बुद्धि अगाडि बढ्छ । गुरूकृपाबाट बुद्धिको विवेकयुक्त निर्णयको प्रकाशमा नै साधक शिष्यले संकल्प लिन्छ । जब सद्गुरूदेवले शिष्यको मनमा योगाग्नि र ज्ञानाग्नि जाग्रत गर्नुहुन्छ, तब त्यो तीब्र उर्जाले युक्त हुन्छ । जाग्रत शक्तिरूपी अग्निमा सबै कुसंस्कार जलेर भस्म हुन जान्छ ।***

परम तत्त्वलाई प्राप्त गर्नुभएका मानवगुरु हाम्रा मनका सारा समस्याहरूलाई तथा हाम्रो बुद्धिको कठिनाईलाई जान्नुहुन्छ र त्यसको निराकरणको व्यवस्थालाई पनि जान्नुहुन्छ । यहाँसम्म कि हामीले पनि आफ्नो मनलाई त्यति जान्दैनौँ जति मानवगुरु जान्नुहुन्छ ।

देवगुरुलाई प्रणाम छ, सिद्धगुरुलाई पनि प्रणाम छ तर मानवगुरु त मानवजातिका परम हितैषी हुनुहुन्छ । उहाँलाई त हामी बारम्बार प्रणाम गर्दछौँ, उहाँहरूको त हामी पूजन गर्दछौँ ।

यस्ता सद्‌गुरूप्रति श्रद्धा हुनु मानवजीवनको ठूलो उपलब्धि हो ।

जसको सद्‌गुरूप्रति श्रद्धा छैन, ऊ कङ्गाल हो । ऊसँग लाखौँ, करोडौँ, अरबौँ रूपैँयाँ भए पनि ऊ कङ्गाल नै हो । हामी उसलाई धनवान् मान्न सक्दैनौँ । तर श्रीराम परम धनवान् हुनुहुन्थ्यो किनकि त्रिभुवनपति भएर पनि उहाँ विश्वामित्रको पाउ दबाउनुहुन्थ्यो, गुरुवर वशिष्ठको आश्रममा सेवा गर्नुहुन्थ्यो । धन्य थियो– श्रीरामको गुरुभक्ति ! उहाँलाई बारम्बार प्रणाम !

गुरु बन्नुभन्दा पहिले गुरुको जीवनमा कैयौँ उतारचढाव आए होलान्, अनेकौँ अनुकूलता र प्रतिकूलताहरू आए होलान्, तिनलाई सहेर नै साधनामा रत रहेर अन्तमा गुरु तत्त्वलाई पाउन सफल हुनुभयो । त्यसरी नै हामी पनि उहाँहरूको संकेतलाई पाएर उहाँहरूको आदर्शमा हिँड्ने, ईश्वरको मार्गमा हिँड्ने दृढ संकल्प गरेर तदनुसार आचरण गरौँ । यही नै ठूलो पूजन हुनेछ । हामी पनि आफ्नो हृदयमा गुरु तत्त्वलाई प्रकट गर्नका लागि तत्पर होऔँ, यही ठूलो गुरु पूजा हुनेछ ।

जसको जीवनमा सद्‌गुरुको प्रकाश फैलिएको छ, वास्तवमा उसैको जीवन जीवन हो । बाँकी त मरिरहेकै छन् । मर्ने शरीरलाई जीवन मानेर मृत्युतर्फ लम्किरहेका छन् । धनाभागी त उनीहरू हुन् जसलाई जीवित छँदा नै सद्‌गुरु प्राप्त भएको छ ।

जसलाई सद्‌गुरुको सान्निध्य प्राप्त भयो, आत्मारामी सन्तहरूको साथ प्राप्त भयो, उहाँहरू आफूलाई अति नै सौभाग्यशाली मान्छन् । आष्टावक्र महाराजलाई पाएर जनक आफूलाई अति नै भाग्यशाली ठान्नुहुन्थ्यो, वशिष्ठलाई पाएर श्रीरामचन्द्र आफूलाई अति नै भाग्यशाली मान्नुहुन्थ्यो, गुरु सान्दीपनलाई पाएर श्रीकृष्ण-बलराम आफूलाई ठूलो भाग्यशाली मान्नुहुन्थ्यो र गुरु गोविन्दापादाचार्यलाई पाएर शंकराचार्य आफूलाई अति नै भाग्यमानी ठान्नुहुन्थ्यो, शंकराचार्यलाई पाएर तोटक आफूलाई अति नै सौभाग्यवान् मान्नुहुन्थ्यो, श्री जनार्दन स्वामीलाई पाएर एकनाथजी आफूलाई परम सौभाग्यशाली ठान्नुहुन्थ्यो भने समर्थलाई पाएर शिवाजी आफूलाई ठूलो भाग्यशाली ठान्नुहुन्थ्यो । सुकरातका शिष्य भनाउँदा प्लेटोलाई आनन्द आउँथ्यो, प्लेटोको शिष्य भन्दा अरस्तु गर्व मान्नुहुन्थ्यो ।

यस्ता शिष्यहरू कहाँ चाहे ऐहिक सुख

***वास्तवमा ईश्वर र गुरू एकै तत्त्वका दुई नाम हुन् । त्यसलाई ईश्वर तत्त्व भनौँ वा गुरू तत्त्व । सद्‌गुरूदेवले कैयौँ पटक भन्नुभएको थियो कि गुरूको शरीर गुरू होइन, तर उहाँको शरीरभित्र कार्यशील ईश्वर तत्त्व नै हो, जसले शरीरको माध्यमबाट कृपा गर्नुहुन्छ ।***

सुविधाहरूको रास होस् वा अनेकौँ प्रतिकूलता होस्, फेरि पनि उहाँहरू सदा मुस्कुराएर जीवन बिताउनुहुन्छ । मुस्कुराएर नै ईश्वरको मार्गमा जानुहुन्छ ।

उत्तम साधकले लाञ्छना सहन्छ, फेरि पनि धन्यवाद दिन्छ । मध्यम साधकले गुनासो गरे पनि धन्यवाद दिन्छ र कनिष्ठ साधक तर्क-कुतर्क गरेर गुरुलाई तौलिरहन्छ ।

कनिष्ठ व्यक्तिलाई, श्रद्धाहीनलाई त गुरु

**देहधारी समर्थ गुरू त आफैमा शिवको प्रकट रूप हुनुहुन्छ । सद्‌गुरूको जाग्रत र प्रत्यक्ष दृश्य स्वरूप गुरू तत्त्व शिवरूप नै हुनुहुन्छ । यो शिव होइन शिवको शक्ति हो जो शिवभावबाट प्रकट भएर चित्तमा क्रियाशील भइरहनु भएको छ । समर्थ गुरूसमक्ष चित्तमा शक्ति त्यसै प्रकारले प्रकट र क्रियाशील हुन्छ, जसरी हामीले कुनै बगिरहेको नदी देख्दछौँ । शिवका पूर्णतत्त्वमय आत्मिकस्वरूपबाट शक्ति प्रकट भएर चित्तको सहयोगमा आएर उसलाई क्रियाशील बनाउँछ ।**

एक मनुष्य मात्र लाग्ने हुन्छ, भगवान्‌को मूर्ति पत्थर देखिने हुन्छ र तीर्थ जलाशय देखिन्छ । तर श्रद्धालुलाई जलाशय तीर्थरूप देखिन्छ, मूर्तिमा भगवान् देखा पर्नुहुन्छ र गुरु साक्षात् परब्रह्म परमात्मा देखिनुहुन्छ ।

गुरु र शिष्यबीच जुन दैवी सम्बन्ध हुन्छ, त्यसलाई संसारका मानिसहरू के बुझ्लान् ? सच्चा शिष्य सद्‌गुरुको चरणमा मेटिन जान्छ र सच्चा सद्‌गुरु निगाहबाट नै शिष्यको हृदयमा वर्षिनुहुन्छ ।

शिष्यलाई गुरुबाट जुन ज्ञान प्राप्त हुन्छ, त्यो शाश्वत हुन्छ । त्यसको बदलामा शिष्यले गुरुलाई के नै दिन सक्छन् र ? यस्तो प्रार्थना भने अवश्यै गर्न सक्छन्–

'गुरुदेव ! हामी हजूरलाई अरू के नै दिन सक्छौँ र ? यति प्रार्थना भने अवश्यै गर्छौं कि हजूरको स्वास्थ्य राम्रो रहोस्, हजूरको आरोग्यधन बढिरहोस्, हजूरको ज्ञानधन बढिरहोस्, हजूरको प्रेमधन बढिरहोस्, हजूरको परोपकारको यो भगीरथ कार्य अझै अधिक बढिरहोस् र हामीजस्ताको कल्याण हुँदै रहोस्...।

गुरुदेव ! हजूरको प्रसन्नता दिनदिनै बढ्दै रहोस्, हजूरको सामर्थ्य अधिकाधिक बढिरहोस् ।

गुरुदेव ! हजूर हाम्रा अवगुणहरूलाई नहेर्नुहोस्, हामी जस्तै भए पनि हजूरकै हौं... हजूरको वचनमा हाम्रो प्रिती बनिरहोस्...हजूरजस्तै सुख-दुःख, मान-अपमान, लाभ-हानि, यश-अपयशमा हामी पनि सम बन्न सकोस् भन्ने हजूरको शुभ संकल्प शीघ्र फलोस्... ।

जति जति भक्ति बढ्छ, ज्ञान अभिवृद्धि हुन्छ, मनुष्य सदाचारी बन्छ, त्यति त्यति नै भक्ति र ज्ञान पुष्ट हुन्छ । यसको पुष्टिबाट साधक गुरुकृपाबाट सच्चिदानन्दघन परमात्माको अनुभवलाई पाउनमा सफल हुन जान्छ, परमात्माको साक्षात्कार गर्नमा सफल हुन्छ । जय गुरुदेव !

# पूर्णत्व देहं मम प्राण रूपं त्वमेवं शरण्यं गुरूत्वं शरण्यं

गुरुको प्रार्थनाका लागि शब्द साना हुन्छन्, भावले नै गुरुतत्त्व, गुरु महिमाको वर्णन गर्न सक्दछ। जब शिष्यको मनमा यो भाव आउँछ कि हजूर नै मेरो प्रभु र इष्ट हुनुहुन्छ। हजूरको नै शक्ति स्वरूप हृदयमा धारण गरिरहेको छु। हजूर मेरो हृदयमा निरन्तर विराजमान हुनुहोस्। म जगतमा विभिन्न प्रकारले व्यवहार र क्रियाहरू गर्दछु। यी सबैका बावजूद पनि हजूरलाई नबिर्सौं। यस भावका साथ साधकले आफ्नो क्रिया गर्दै रहन्छ।

मानिसभित्र गुण र अवगुण दुवै हुन्छन्। हृदयमा पनि जन्म-जन्मको भावको आवरण हुन्छ। त्यो संसारमा विषयभोगको लालसा लिएर आउँछ। यसका बावजूद पनि उसले गुरुसित यही प्रार्थना गर्दछ कि हे गुरुदेव ! हजूरले मेरो चित्तको विचारतिर ध्यान नदिएर मलाई पूर्ण दोषसहित आफ्नो शरणमा स्वीकार गर्नुहोस्, किनकि हजूर नै मेरो अन्तर्मनमा जाग्रत र क्रियाशील भएर मेरा अज्ञानजन्य सबै कुसंस्कारलाई निर्मूल गर्न समर्थ हुनुहुन्छ। हजूरसित प्रार्थना छ कि मेरो मन कहिल्यै पनि विकार र कुभावबाट प्रभावित नहोस् र गुरूप्रति नै मेरो हृदयमा प्रेम भरपूर बनिरहोस्।

सारा ज्ञान गुरुदेवमा नै निहित छ, गुरुदेव नै ज्ञानस्वरूप हुनुहुन्छ। जगतको ज्ञान गुरुशक्तिबाट नै क्रियाशील हुन्छन्। चित्तबाट गुरुशक्तिको विच्छेद हुनासाथ नै सारा ज्ञान विलुप्त हुन जान्छन् किनकि जगतको ज्ञानको परिभाषा अलग छ। एकै समयमा पनि एकै वस्तुको ज्ञान पनि अलग-अलग रूपमा देखिन्छन्। केवल गुरुदेव नै त्यस ज्ञान भण्डार हुनुहुन्छ जो सदा एकरस, नित्य तथा स्वप्रकाशित हुनुहुन्छ। गुरु ज्ञानलाई प्राप्त गर्नका लागि कुनै शास्त्रको अध्ययनको आवश्यकता छैन किनकि

यो सांसारीक ज्ञान त गुरु ज्ञानको छायाँ स्वरूप मात्रै हो।

तत्त्वदर्शन सिद्धान्तका अनुसार गुरु नै एक मात्र शक्तिमान् हुनुहुन्छ। उहाँबाट नै शक्ति ग्रहण गरेर अन्य सबैले शक्ति प्राप्त गर्दछन्। गुरुदेव नै नित्य शक्तिमान् हुनुहुन्छ। उहाँको शक्तिको न त ह्रास हुन्छ, न विकास। उहाँ त सधैँ एक रस बनिरहनु हुन्छ। यसैले त गुरुदेवलाई सबैका प्रभु स्वामी भनिन्छ। गुरुदेवको शक्तिले मन, बुद्धि तथा चित्तलाई कार्यशील बनाउँछ। गुरुदेवबाट मनको कुनै गुप्त कुरा लुकाउनु सम्भव छैन। अन्तरमा बस्नुभएको हुनाले र अन्तरको कुरा जान्नु हुने भएकोले नै गुरुदेवलाई अन्तर्यामी भनिन्छ।

देहधारी गुरु, जसलाई जगतमा गुरु भनिन्छ, उहाँको कुनै शारीरिक चेष्टा अथवा संकल्पबाट

बुद्धि अगाडि बढ्दछ । गुरुकृपाबाट बुद्धिको विवेकयुक्त निर्णयको प्रकाशमा नै साधक शिष्यले संकल्प लिन्छ । जब सद्गुरुदेवले शिष्यको मनमा योगाग्नि र ज्ञानाग्नि जाग्रत गर्नुहुन्छ, तब त्यो तीब्र ऊर्जाले युक्त हुन्छ । जाग्रत शक्तिरूपी अग्निमा सबै कुसंस्कार जलेर भस्म हुन जान्छ। चित्तले हवन कुण्डको रूप लिन्छ र त्यसमा जाग्रत शक्तिरूपी अग्निका ज्वालाहरू दन्किरहन्छन् । पूर्वजन्मको कुसंस्कार जलेर भस्म हुन्छन् । यसलाई आन्तरिक हवन, यौगिक हवन, आध्यात्मिक हवन भनिन्छ । शिष्यका लागि बाह्य हवनको अपेक्षा यो यौगिक हवन, आध्यात्मिक हवन आवश्यक हुन्छ ।

यति धेरै अग्नि भएर पनि गुरुतत्त्व सदा शान्त रहन्छ । गुरु तत्त्वको कार्य भनेको शक्तिको उग्र क्रिया प्रारम्भ गर्नु हो । गुरुशक्ति त त्यस दीपकजस्तै हो जसको प्रकाशमा विभिन्न क्रियाहरू घटित हुन्छन् तर प्रकाश भने सधैं निर्मल नै बनिरहन्छन् ।

गुरुको मनमा संकल्पबाट नै शिष्यमा शक्ति जाग्रत हुन्छ। शिष्यमा यो शक्ति जागरणका लागि गुरुको मनमा शिष्यको कल्याणको भावना नै भाव हो । गुरुको संकल्पानुसार शक्ति बाहिर प्रवाहित हुन्छ र शिष्यको चित्तशक्तिबाट संयोगमा आउँछ। यी सारा क्रियाहरू अत्यन्त नै सूक्ष्म स्तरमा घट्दछ। शक्तिको यस आवागमनलाई गुरुद्वारा शक्ति प्रदान गर्नु र शिष्यद्वारा शक्ति गर्नु केवल गुरु र शिष्यले नै आपसमा बुझ्न सक्दछन्। यस भावहरूका नजिक बसेको तेस्रो व्यक्तिले भने यस कुरालाई बुझ्न सक्दैन । यी सबै कुरा गुरुको मनको संकल्पबाट हुन्छ। यसैलाई दीक्षा भनिन्छ। यो दीक्षा स्पर्शबाट,

शक्ति जाग्रत हुँदैन। देहधारी गुरुभित्र जाग्रत गुरुतत्त्वको कृपाबाट नै शिष्यमा शक्ति जाग्रत हुन्छ । शिष्यमा शक्ति जाग्रत गर्नु नै गुरुको वास्तविक कृपा हो ।

यो शक्तिले शिष्यको लागि आध्यात्मिक उन्नतिको द्वार खोल्दछ र शिष्यमा शक्ति जाग्रत भएपछि पुराना सडेगलेका संस्कारहरूको क्षय प्रारम्भ हुन जान्छ । जबसम्म शक्ति बहिर्मुखी हुन्छ तबसम्म मन चित्तमा यो संसार उभिएको हुन्छ, इच्छा, कामना, वासनाहरू बढिरहन्छन् । शक्ति अन्तर्मुखी हुन थालेपछि भित्र नवीन संस्कारको उदय हुन जान्छ, शरीरमा विभिन्न क्रियाहरू आफै हुन लाग्छन् । हाँस्नु, गाउनु, रुनु, उफ्रनु, शरीर हलुको र भारी हुनु, नाद श्रवण, दृश्य दर्शन, आसन, प्राणायम विभिन्न क्रियाहरूबाट साधकले अति नै आनन्द अनुभव गर्दछ ।

जब गुरुकृपा हुन्छ तब मन निर्मल हुन जान्छ र

वाणीबाट, दृष्टिबाट पनि दिइन्छ। तर हर स्थितिमा संकल्प अवश्य रहन्छ, हरेक शिष्यको गुरुका साथ एक अलग शक्ति प्रवाहको सम्बन्ध रहन्छ।

जब शिष्य यसप्रकार शक्ति तत्त्व दीक्षा ग्रहण गर्दछ, तब यो शक्ति जाग्रत भएर अन्तर्मुखी क्रिया प्रारम्भ गर्दछ। तब शिष्यभित्र संचित संस्कार जसले शिष्यलाई कैयौँ प्रकारका विघ्न, बाधाहरू, कठिनाई, र समस्याहरू दिन्छन्, आफैमा क्षीण हुन प्रारम्भ हुन्छ। विषयहरूप्रति चित्तको आकर्षण हटेर शक्तिप्रति आन्तरिक आनन्द बढ्न लाग्दछ र उसले एक विशिष्ट आन्तरिक शक्तिको अनुभव गर्न लाग्छ। जगतका झन्झट उसलाई सानो लाग्न थाल्छ।

देहधारी समर्थ गुरु त आफैमा शिवको प्रकट रूप हुनुहुन्छ। सद्गुरुको जाग्रत र प्रत्यक्ष दृश्य स्वरूप गुरु तत्त्व शिवरूप नै हुनुहुन्छ। यो शिव होइन शिवको शक्ति हो जो शिव भावबाट प्रकट भएर चित्तमा क्रियाशील भइरहनु भएको छ। समर्थ गुरु समक्ष चित्तमा शक्ति त्यसै प्रकारले प्रकट र क्रियाशील हुन्छ, जसरी हामीले कुनै बगिरहेको नदी देख्दछौँ। शिवका पूर्णतत्त्वमय आत्मिक स्वरूप हो जसबाट शक्ति प्रकट भएर चित्तको सहयोगमा आएर उसलाई क्रियाशील बनाउँछ।

जसरी पिता, आफ्ना पुत्रमाथि स्नेह राख्छ, त्यसरी नै गुरु पनि आफ्ना शष्यिप्रति कृपा राख्नुहुन्छ। पिता मोहवश पुत्रमाथि स्नेह गर्नुहुन्छ तर गुरुले शिष्यको आध्यात्मिक कल्याणका लागि कृपा गर्नुहुन्छ। यो कृपा कैयौँ रूपमा प्रकट हुन्छ। कहिले त गुरुले स्नेहपूर्वक व्यवहारबाट, युक्तिहरूबाट सम्झाउनुहुन्छ तथा कहिले हप्काएर सम्झाउनु हुन्छ। तर दुवै अवस्थामा शिष्यको मङ्गल कामना नै गुरुको अभिमुख रहन्छ। गुरुले कहिल्यै शिष्यलाई अपमानित गरेर, उसको अहङ्कार तोड्दछ त कहिले प्रशंसा गरेर उसको उत्साह बढाउनुहुन्छ। कुनै शिष्यलाई उसको भूमिकानुसार कठीन साधनामा लगाउनुहुन्छ, त कसैलाई अपेक्षाकृत कतै सरल साधनामा लगाएर नै सन्तोष लिनुहुन्छ। यी सबै कृपाका नै विभिन्न रूपहरू हुन्। साधक शिष्यले आफ्नो मनमा यो कुरालाई राम्रोसँग बुझ्नु पर्दछ कि गुरुले उसलाई कुनै पनि अवस्थामा राख्नु भए पनि, जस्तै व्यवहार गर्नु भए पनि, गुरुले त चाहनुहुन्छ शिष्यको मङ्गल नै। त्यसका लागि नै उहाँले कैयौँ प्रकारका उपाय अपनाउनुहुन्छ। यदि यो कुरा शिष्यले बुझ्दछ भने उसको कल्याण अवश्यम्भावी छ।

गुरुले कृपा गर्नु भएर नै शिष्यको अन्तर्मुखी शक्तिलाई जाग्रत गर्नुहुन्छ। सद्गुरु सबै दिनमा समर्थ हुनुहुन्छ। उहाँ शिष्यलाई भौतिक दृष्टिले सफल बनाउन चाहनुहुन्छ तर शिष्यले हरेक समयमा यस कुराको ध्यान राख्नु पर्दछ कि गुरु कृपाबाट जुन कार्यसिद्धि भएको छ, त्यसको कारण संसारप्रति

आसक्ति अझ बढ्न नजाओस् । गुरुको कार्य शिष्यको मनको निर्मल भावलाई विकसित गर्नु हो ।

कैयौँ साधक गुरुलाई केवल ईश्वर प्राप्तिमा सहायक मान्छन् र गुरुतत्त्वलाई बुझ्न सक्दैनन् । वास्तवमा ईश्वर र गुरु एकै तत्त्वका दुई नाम हुन् । त्यसलाई ईश्वर तत्त्व भनौँ वा गुरुतत्त्व । सद्गुरुदेवले कैयौँ पटक भन्नुभएको थियो कि गुरुको शरीर गुरु होइन, तर उहाँको शरीरभित्र कार्यशील ईश्वर तत्त्व नै हो जसले शरीरको माध्यमबाट कृपा गर्नुहुन्छ । साधकले पनि आफ्नो लक्ष्य गुरुको शरीरभित्र स्थित ईश्वर तत्त्व, गुरु तत्त्वमाथि स्थिर गर्नुपर्छ । त्यसको लागि यो आवश्यक छ कि उसले आफूभित्र कार्यशील गुरुतत्त्वमाथि पनि चित्तलाई स्थिर गरोस् अन्यथा गुरु केवल शरीर मात्रै दखिनेछ । चैतन्य शक्ति त शरीरको माध्यमबाट प्रकट हुन्छ र जुन माध्यमबाट प्रकट हुन्छ त्यसलाई गुरु भनिन्छ ।

मनुष्य आफ्ना इन्द्रियहरूबाट संसारका क्रियाकर्म गर्दछन् । सामाजिक पारिवारीक कर्तव्यको निर्वाह गर्दछन् । यस्तो त ईश्वरीय गुरुशक्तिको संयोगबाट नै गर्न सक्दछन् । शरीर त केवल एउटा माध्यम हो, त्यसलाई शुद्ध मार्गतिर लाने ईश्वरीय शक्ति गुरुशक्ति नै हो । गुरुतत्त्व नै मनुष्यमा मानसिक संकल्प, बौद्धिक विचारका क्रियालाई चलाउँछ र देह जीवन क्रमलाई बनाइराख्नका लागि श्वास-प्रश्वासको क्रियाको रूपमा अभिव्यक्त हुन्छ । गुरुतत्त्व नै कुनै शरीरको माध्यमबाट प्रकट भएर साधक शिष्यको बन्धन पहिले ढिला गर्नुहुन्छ र फेरि त्यसलाई मुक्त गर्नुहुन्छ, अन्धकारलाई हटाएर प्रकाश फैलाउनुहुन्छ ।

जगतमा कैयौँ मानिस भूत, पिशाच वृत्ति भएका हुन्छन् । अकारण नै अन्य मानिसलाई आफ्ना कर्म, वाणी तथा मानसिक विचारहरूबाट दु:ख दिन्छन् । यसैमा आनन्द मान्छन् । मनुष्यले प्रारम्भमा यस्तो वृत्तिहरूबाट केही बाह्य आनन्द अनुभव गर्दछ किनकि जस्तो व्यक्तिको संगति हुन्छ उसै अनुरूप उसलाई फल मिल्दछ र त्यस्तै उसका संस्कार बन्छन् । तब गुरुले आफूभित्र जाग्रत शक्तिरूपी योगाग्निलाई शिष्यभित्र जाग्रत गरेर यस प्रकारका कुसंस्कारहरूबाट मुक्त गर्नुहुन्छ, उसका कुसंस्कारहरूलाई भस्म गर्नुहुन्छ ।

गुरुको यश ज्ञान वेद, शास्त्र गर्दछ, मन्त्र-तन्त्र-यन्त्र गर्दछ । शास्त्रहरूमा संसारको त तात्त्विक वर्णन पाइन्छ, जुन देखिन्छ, त्यही स्पष्ट हुन्छ । यसका साथ जुन चैतन्य शक्ति छ, उसको सम्बन्धमा पनि विस्तारपूर्वक विश्लेषण पाइन्छ । जब यो चैतन्य शक्ति छ त यस जगतको विस्तार छ । अन्यथा यो जगत मृतप्राय: हुन्छ ।

मन्त्र पनि गुरुशक्तिको स्वरूप हो । मन्त्रको वास्तविक स्वरूप त्यसको अक्षर समूह होइनन् । त्यसको जुन आत्मिक स्वरूप छ, जुन त्यसको चैतन्य स्वरूप छ, त्यो मनुष्यलाई जगाउनका लागि हो । जबसम्म मन्त्रशक्ति, जसलाई गुरुशक्ति भनिन्छ जाग्रत हुँदैन, तबसम्म मन्त्र साधकको साधना पूर्ण हुँदैन । जुन मन्त्र शक्ति जाग्रत हुँदैन, त्यो अचेतन मन्त्र भनिन्छ । यसप्रकार प्रत्येक मन्त्र गुरुशक्तिको महिमा, कृपाको विस्तारस्वरूप हुन् । मन्त्रबाट दैवीय शक्ति, गुरुशक्ति हटाउने हो भने त्यो केवल शब्द मात्रै रहनेछ ।

यसैप्रकार तन्त्र त गुरुशक्तिसँग नै सम्बन्धित छ । यन्त्रमा पनि देवताको शक्तिको व्याख्या पाइन्छ । सकाम शक्ति यन्त्रले प्रतीक रूपमा साधकका लागि उसको मनोनुकूल कार्य गर्दछ । तन्त्र अर्थात् क्रिया र मनुष्य साधक शिष्य आफ्ना क्रिया श्रेष्ठ रूपबाट सम्पादित गर्नमा तब समर्थ हुन्छ जब उसको शक्ति र ईश्वरीय शक्ति, गुरुशक्तिको मिलन हुन्छ । यसैको प्रतीक यन्त्र हो । अत: यो स्पष्ट हुन जान्छ कि मन्त्र होस्, तन्त्र होस् वा यन्त्र, गुरुशक्तिको नै विस्तारित रूप हो । मनुष्यलाई आफ्ना कार्यका लागि शब्द चाहिन्छ, क्रिया चाहिन्छ र प्रतीक चाहिन्छ । विशुद्ध गुरुशक्तिप्रति त्यो एकाग्र हुन पाउँदैन । यसैले गुरुशक्तिका यी स्वरूपहरूप्रति एकाग्र भएर आफ्नो भौतिक र आध्यात्मिक इच्छाहरूलाई पूर्ण गर्ने प्रयास गर्दछ ।

जय गुरुदेव !

# सरस्वती पूजन

प्रत्येक साधक साधिका एवं माताको कृपा प्राप्त गर्न चाहने जो कोहीले पनि श्रीपञ्चमीको अवसरका साथसाथै अन्य समयमा पनि आफ्नो अनुकूलताअनुसार माता महासरस्वतीको पूजन गर्न सक्नुहुन्छ । पूजनको लागि स्नान गरेर शुद्ध पवित्र भई पूजन सामग्री तयार पार्नुहोस् । त्यसपछि आफ्नो अगाडि काठको पिर्कामा पहेँलो आसन ओछ्याई त्यसमाथि माता महासरस्वतीको प्राणप्रतिष्ठित दिव्य तस्वीर तथा यन्त्र स्थापित गर्नुहोस् । पहिले विधिपूर्वक भगवान् गणपति एवं गुरु पूजन गरेर निम्न विधिबाट मूल पूजन आरम्भ गर्नुहोस् ।

## ध्यानः

दुवै हात जोडेर ध्यान गर्नुहोस्-

**शुक्लां ब्रह्म विचार सार परमामाद्यां जगद्व्यापिनीं । वीणा पुस्तक धारिणीमभयदां जाड्यान्धकारापहाम् ॥ हस्ते स्फाटिक मालिकां च दधतीं पद्मासने संस्थितां । वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम् ॥**

**श्री सरस्वत्यै नमः ध्यानं समर्पयामि ।**

'शुक्लवर्ण, ब्रह्मस्वरूपा, आद्याशक्तिरूपा, समस्त संसारमा शक्तिरूपले व्याप्त, आफ्ना दुवै हातमा वीणा र पुस्तक धारण गर्ने, जड एवं अज्ञानलाई नाश गर्ने, स्फटिक माला धारण गरेर पद्मासनमा विराजमान, बुद्धिकी अधिष्ठात्री देवी भगवती सरस्वतीलाई म शुद्ध भावबाट नमन गर्दछु ।'

## आवाहनः

हातमा पुष्प लिएर आवाहन गर्नुहोस् ।

**चतुर्भुजां चन्द्रवर्णां चतुरानन वल्लभाम् ।**
**आवाहयामि वाग्देवीं वीणा पुस्तक धारिणीम् ॥**
**श्री सरस्वत्यै नमः आवाहनं समर्पयामि ।**

## गन्धः

चन्दन अथवा कुंकुम अर्पण गर्नुहोस् ।

**कुंकुमागरू कस्तूरी कर्पूराद्यैश्च संयुक्तम् ।**
**गन्धं गृहाण शारदे विधिपत्नि ! नमोऽस्तुते ॥**
**श्री सरस्वत्यै नमः गन्धं समर्पयामि ।**

## धूपः

सुगन्धित धूप बालेर देखाउनुहोस् ।

**गुग्गुल्वगरू संयुक्तं भक्त्या दत्तं विधिप्रिये ।**
**धूपं गृहाण देवेशि ! मातृमण्डल पूजिते ॥**
**श्री सरस्वत्यै नमः धूपम् आघ्रापयामि ।**

## दीपः

दीयो बालेर देखाइदिनुहोस् ।

**घृताक्तवर्ति संयुक्तं वाणि चैतन्य दीपितम् ।**
**दीपं गृहाण वरदे कमलासन वल्लभे ॥**
**श्री सरस्वत्यै नमः दीपं दर्शयामि ।**

## नैवेद्यः

मिष्ठान्न अर्पण गर्नुहोस् ।

**शर्कराघृत संयुक्तं मधुरं स्वादु चोत्तमं ।**
**उपहार समायुक्तं नैवेद्यं प्रतिगृह्यताम् ॥**
**श्री सरस्वत्यै नमः नैवेद्यं निवेदयामि,**
**ऋतुफलानि च समर्पयामि नमः ।**

## नीराजनः

नीराजन गर्नुहोस् ।

**नीराजनं नीरजाक्षि नीरजासन वल्लभे ।**
**कर्पूरखण्ड कलितं गृहाण करुणार्णवे ॥**
**श्री सरस्वत्यै नमः नीराजनं समर्पयामि ।**

## पुष्पाञ्जलिः

पुष्पाञ्जलि अर्पण गर्नुहोस् ।

**पुष्पांजलि मया दत्ता गृहाण वर्णमालिनि ।**
**शारदे लोकमातस्त्वं आश्रितेष्ट प्रदायिनि ॥**
**श्री सरस्वत्यै नमः पुष्पांजलिं समर्पयामि ।**

## नमस्कारः

दुवै हात जोडी नमस्कार मुद्रामा बस्नुहोस् ।

**या कुन्देन्दु तुषारहार**
**धवला या शुभ्रवस्त्रावृता,**
**या वीणा वरदण्डमण्डितकरा**
**या श्वेत पद्मासना ।**
**या ब्रह्माच्युत शंकरप्रभृतिभिर्देवैः**
**सदा वन्दिता,**
**सा मां पातु सरस्वती**
**भगवती निःशेषजाड्यापहा ॥**

## विशेषार्घ्यः

**अर्घ्य जल अर्पण गर्नुहोस् ।**
**अघहीने गृहाणेदम् अर्घ्यमष्टांग संयुक्तं ।**
**अम्बाखिलानां जगतामम्बुजासन सुन्दरि ॥**
**श्री सरस्वत्यै नमः विशेषार्घ्यं समर्पयामि ।**
**अनया पूजया श्री सरस्वती देवता प्रीयन्ताम्**
**ॐ तत् सत् ब्रह्मार्पणमस्तु ।**

# सरस्वती स्तोत्र

या कुन्देन्दु तुषार हार धवला या शुभ्र वस्त्रावृता ।
या वीणा वरदण्ड मण्डित करा या श्वेत पद्मासना ।।
या ब्रह्माच्युत शंकर प्रभृतिभिर्देवैः सदा वन्दिता ।
सा मां पातु सरस्वती भगवती निःशेषजाड्यापहा ।।१।।
आशासु राशी भव दङ्ग वल्ली
भासैव दासीकृत दुग्ध सिन्धुम् ।
मन्द स्मितै निन्दित शारदेन्दुं
वन्देऽरविन्दासन सुन्दरि त्वाम् ।।२।।
शारदा शारदाम्भोज वदना वदनाम्बुजे ।
सर्वदा सर्वदा स्माकं सन्निधिं सन्निधिं क्रियात् ।।३।।
सरस्वतीं च तां नौमि वागधिष्ठातृ देवताम् ।
देवत्वं प्रतिपद्यन्ते यदनुग्रहतो जनाः ।।४।।
पातु नो निकषग्रावा मतिहेम्नः सरस्वती ।
प्राज्ञेतर परिच्छेदं वचसेव करोति या ।।५।।
शुक्लां ब्रह्म विचार सार परमामाद्यां जगद् व्यापिनीं ।
वीणा पुस्तक धारिणीम भयदां जाड्यन्धकारापहाम् ।
हस्ते स्फाटिक मालिकां च दधतीं पद्मासने संस्थितां ।
वन्दे तां परमेश्वरीं भगवतीं बुद्धिप्रदां शारदाम् ।।६।।
वीणाधरे विपुल मङ्गल दानशीले ।
भक्तर्ति नाशिनी विरंचि हरीश वन्धे ।
कीर्ति प्रदेऽखिल मनोरथदे महार्हे,
विद्या प्रदायिनी सरस्वति नौमि नित्यम् ।।७।।
श्वेताब्ज पूर्ण विमलासन संस्थिते हे
श्वेताम्बरावृत मनोहर मंजुगात्रे ।
उद्यन्मनोज्ञसित पंकज मंजुलास्ये,
विद्या प्रदायिनी सरस्वति नौमि नित्यम् ।।८।।
मातस्त्वदीयपद पंकद भक्तियुक्ता,
ये त्वां भजन्ति निखिलान परान्विहाय ।
ते निर्जरत्वमिह यान्ति कलेवरेण,
भूवह्नि वायु गगनाम्बुविनिर्मितेन ।।९।।
मोहान्धकार भरिते हृदये मदीये,
मातः सदैव कुरु वासमुदार भावे ।
स्वीयाखिला वय निर्मल सुप्रभावि
शीघ्रं विनाशय मनोगतं अंधकारम् ।।१०।।
ब्रह्मा जगत सृजति पालयतीन्दिरेशः,
शम्भुर्विनाशयति देवि तव प्रभावैः ।
न स्यात्कृपा यदि तव प्रकटप्रभावे
न स्युः कथञ्चिदपि ते निजकार्यदक्षाः।।११।।
लक्ष्मी मेंधा धरा पुष्टि गौंरी तुष्टिःप्रभा धृतिः ।
एताभिः पाहि तनुभिरष्टाभिर्मा सरस्वति ।।१२।।
सरस्वत्यै नमो नित्यं भद्रकाल्यै नमो नमः ।
वेद वेदान्त वेदाङ्ग विद्या स्थानेभ्य एव च ।।१३।।
सरस्वति महाभागे विद्ये कमललोचने ।
विद्यारूपे विशालाक्षि विद्यां देहि नमोऽस्तु ते ।।१४।।
यदक्षरं पदं भ्रष्टं मात्राहीनं च यद्भवेत ।
तत्सर्व क्षम्यतां देवि प्रसीद परमेश्वरी ।।१५।। ❑

# आश्रममा गुरुको अस्तित्व खोज्नेहरू

'आश्रममा नजाऊ, त्यहाँ त अब गुरु हुनुहुन्न ।', 'आश्रममा गएर केही फाइदा छैन, किनकि त्यहाँबाट गुरु अन्त कतै हिँडिसक्नु भएको छ ।' यी कुराहरू सुन्दाखेरि दु:ख नमानिरहन कसले पो सक्लान् र ? हामी पनि दु:खी छौँ । तपाईं पनि दु:खी हुनुहुन्छ होला भन्ठान्छौँ । कम से कम गुरुलाई सर्वत्र देख्नेहरू र सर्वत्र गुरुको अस्तित्व मान्नेहरूलाई यी हल्लाले मर्माहत पार्ने त भए नै । तर कहिलेकाहीँ भने यी निराधार, कपोलकल्पित र भ्रामक हल्ला सुन्दा हाँसो पनि उठ्ने गर्छ । कतिपय त कहिलेकाहीँ एकान्तमा गएर खित्का छोडी-छोडी धेरै हाँस्दा हुन् । नहाँसुन् पनि कसरी ? आखिर यस्तो हल्ला त हाँसो दिने अनि दु:खी बनाउनेको फ्युजन जस्तो पो छ, अरे ।

हाँसो उठ्दो यस्ता हल्ला नियोजित हो वा होइन भन्नेतिर नजाऔँ । बरु गाँठी कुरातिर जानुपर्ला ।

कुरा के हो भने यस्तो हल्लाको पछि लाग्नेहरूलाई यस भ्रमबाट बचाउनु सबैको कर्तव्य हो । भ्रामक हल्लाका पीडितहरूलाई यस्तो भ्रममा नपर्ने मात्रै होइन, निर्धक्क भएर खुलेर विरोध गर्नेतिर सचेत गराउनु पनि सबैको दायित्व हो, धर्म हो ।

कठै, विचरा ! सोझा-सीधाहरू जे भन्दिए पनि इमान्दारीपूर्वक मान्छन् । यहाँ गुरुदेव छैन, त्यहाँ गुरुदेव छैन भनेर रनभुल्ल र भ्रममा पर्नु पर्ने कारण जेसुकै होस्, तर हल्लामा भने रौँलाई हजार भाग लाउँदा निस्कने एक भाग जतिको पनि सत्यता छैन भन्ने कुरा पक्का हो ।

कसरी र किन पक्का हो ? किनकि वेदले ईश्वर र गुरुलाई सर्वत्र स्वीकारेको छ, सर्वज्ञ मानेको छ । वेदको यस श्लोकबाट प्रष्ट हुन्छ–

'सर्वं खल्विदं ब्रह्म' ।

हामी शास्त्र र गुरु वचनमा विश्वास गर्नेहरूलाई माथिको श्लोक काफी छ गुरुको सर्वव्याकता स्वीकार्नका लागि । तर पनि माथिको वैदिक मन्त्रबाट पनि गुरु सबैतिर हुनुहुन्छ भन्ने विश्वास अझै पलाउन नसकेको हो भने बाइबलतिर पनि चियाउन सकिन्छ– All things were made by Him and without Him was not made anything that was made. सृष्टिविज्ञानमा निहित यसै परमसत्य (Absolute Truth) लाई सच्चा भक्तले जताततै देख्छ, जताततै रसास्वादन गर्छ, जतासुकै दर्शन गर्छ । भने पछि, अहिले फैलिएको हल्ला असत्य हो भन्ने पुष्टि हुन्छ ।

सामान्य विवेक भएकाले पनि 'आश्रममा गुरु हुनुहुन्न' भन्ने कुरालाई ठट्यौलो पाराले लिँदा हुन् । हामी शुरुमा 'गुरु हुनुहुन्छ' भनेर नै आश्रम आएका थियौँ । आश्रममा आएपछि हामीलाई कति लाभ भयो, कति हाम्रा समस्याहरू समाधान भए, कति हाम्रा न्यूनताहरू हटे, कति गम्भीर अवस्थाहरूबाट हामीलाई मुक्ति मिल्यो, अलिकति मात्रै पनि स्मरणपटलमा बल दिने हो भने सलल खोला बगेजस्तै गरी ती कुराहरू हाम्रा 'सम्झने केन्द्र'मा बग्नेछन् अथवा स्मरणमा आउनेछन् । हामीलाई थाहा हुनेछ कि हाम्रो विश्वास, भक्ति र समर्पण नै ती आधार हुन् जसको धरातलमा टेकेर गुरुदेवले हामीलाई कृपा गर्नुभयो, आशीर्वाद दिनुभयो र हाम्रा इच्छा, आकांक्षाहरू पूरा भए । हाम्रो आधार नै गुरुसत्ता हो । त्यसैबाट हामी कृतकृत भएर धन्यधन्य भएका हौँ । हामी आश्रम आउँदा भलै अन्य साधक-साधिका, कार्यकर्ता, सिनियर-जुनियर दाइ-भाइ, वरिष्ठ-कनिष्ठ दिदी-बहिनी जोसुकैको भनाइ सुनेर, आश्वासन पाएर, हौसिएर, जोशिएर

आएका भए पनि गुरुको अनुकम्पा पाउनका लागि नै आएका थियौँ, उहाँको सेवा गर्न र उहाँको प्रेम पाउन अनि उहाँलाई पनि आफ्नो निश्चल प्रेम अर्पण गर्न आएका थियौँ । यतिञ्जेलसम्म हाम्रो गुरुहरूप्रतिको भक्तिभावले काम गर्‍यो, हामीलाई कृपा, आशीर्वाद प्राप्त भयो । अब के गुरुहरूप्रतिको हाम्रा ती कोमल भावनाहरू मरिसके ? अब के हाम्रो बुद्धिमा धमिरा लागिसक्यो ? के अब हाम्रो विवेकले हामीलाई धोका दिएकै हो त ? के कारणले सर्वत्र विराजमान गुरुलाई जताततै देख्न छोडेर 'यहाँ गुरु हुनुहुन्न'को नारायुक्त प्लेकार्ड र ब्यानर बोकेर सहर, बजार गुञ्जाइरहेका छौँ । अङ्ग्रेजीमा एउटा शब्द छ– 'ननसेन्स' । वाक्यै बनाएर भन्ने हो भने यो हल्लालाई भन्छु– 'ह्वाट् ए ननसेन्स ?'

प्रत्येकले एउटा कुरा ख्याल गर्नु आवश्यक छ कि गुरुदेव हाम्रो भावनामा हुनुहुन्छ, हाम्रो विश्वास र आस्थामा हुनुहुन्छ । कसैको 'छ' र 'छैन'मा बस्नुहुने होइन गुरुदेव । अहिले पनि तपाईँ विश्वासपूर्वक, भक्तिपूर्वक आश्रममा आउनुहोस्, पादुकाको दर्शन गर्नुहोस्, आफ्ना समस्या, वेदनाहरूलाई गुरु पादुका समक्ष राख्नुहोस् । अकारण करुण अर्थात् जो बिना कारण पनि सबै प्राणीलाई करुणा वर्षाउनु हुन्छ, त्यस्ता करुणासागर गुरुदेवले नसुन्ने त कुरै आउँदैन । गुरुदेवको कृपा, अनुकम्पाले युक्त सुनुवाइ नै यस्तो हल्लाको लागि ठूलो जवाफ हुनेछ । हाम्रो कर्तव्य त निराधार र कपोलकल्पित हल्लाबाट सबैलाई बचाउने हो, सावधान गर्ने हो । सावधानीका बावजूद, सत्यासत्य पहिचान गराउँदा गराउँदै पनि कोही हल्लाकै पछि लाग्छन् भने 'भीरबाट लड्ने.....लाई' भने जस्तै काँध थाम्न सकिन्न ।

जसले जडतत्त्व (Matter) को बारेमा मात्रै जान्दछ, उसले आखिर गुरुदेवको शुद्ध परम चैतन्यता सर्वत्र भएको बखान गरोस् पनि कसरी ? किनकि उसले त गुरुलाई पनि शरीर सम्झेको हुन्छ । त्यसैले उसले भेद देख्छ– त्यहाँ गुरु हुनुहुन्न, यहाँ मात्रै हुनुहुन्छ । उसले भनेको झूटो हो, आफूले फलाकेका मात्रै सत्य हुन् । उसको हेर्ने परिधि नै द्वैत भावमा टुङ्गिन्छ । समता त उसका लागि सपनाको फल झैँ हुन्छ । जड र चेतन दुवैको महिमा र गरिमा नबुझ्नेले त परम चैतन्यलाई पनि आफै कहाँ मात्रै सीमित देख्छ, एउटा ठाउँ विशेषमा मात्रै समेटिएको देख्छ । जो सद्‌गुरुको अनन्त सौरभको निवास हुनुहुन्छ र परम दिव्य हुनुहुन्छ, उहाँको निरामय, सुन्दर, दिव्य ज्योतिर्मय सत्ता अणु-अणुमा व्याप्त छ, गुरुद्वारा अणुप्राणित प्रत्येक स्थान उहाँबाट परिपूर्ण छ । यस्तो विराट् र वृहत् भावभूमि राख्नेहरूका लागि आश्रममा गुरु छैन भन्नु दूधमा घिउ छैन भन्नु जस्तै हो, तिलमा तेल छैन भन्नु जस्तै हो ।

गोरक्ष निखिल वाणीका विगतका कैयौँ अङ्कहरु पनि आश्रममा भएको गुरुहरुको साक्षात् प्राकट्य, कृपा, अनुकम्पाका अनुभव-अनुभूतिहरुले भरिएका छन् । गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रमहरुमा साधक साधिकाहरुका अनगिन्ती अनुभव-अनुभूतिहरु बजेका छन् जसले आश्रममा गुरुहरुको सूक्ष्म उपस्थिति मात्रै होइन, भक्तिभावको आडमा उहाँहरु स्थूल रुपमा पनि भक्त, शिष्यहरुलाई कृपा गर्नुहुन्छ, साक्षात् दर्शन दिनुहुन्छ भन्ने सिद्ध हुन्छ ।

तपाईँ भने यस्तो हल्लाबाट टाढा हुनुहोस् । यस्तो निराधार हल्लामा लाग्दालाग्दै गुमेका आफ्ना विश्वास, आस्था, निष्ठा र समर्पणलाई बढाउनुहोस्, आफूलाई दृढ र सबल बनाउनुहोस्, आफ्नो विवेक शक्तिको उपयोग गर्नुहोस् । सत्यको बोध गराइदिनका लागि गुरुदेवसँग अकृतिम प्रार्थना गर्नुहोस्, पहिलेको जस्तै उहाँमा एकपटक फेरि समर्पित हुनुहोस् । हे सत्यानुरागी साधक- साधिका, कार्यकर्ता, शुभेच्छुक, भक्त र उपासकहरू ! हाम्रो विशेष आग्रह सबैलाई छ कि गुरुदेवलाई सर्वत्र देख्ने पुरुषार्थ गर्नुहोस्, उहाँलाई हाम्रो आश्रममा मात्रै होइन, तल-माथि, भित्र-बाहिर, दायाँ-बायाँ, आकाश-पाताल, कुना-काप्चा जताततै उहाँको नै दर्शन गर्नुहोस् । त्यसपछि सत्यको उद्‌घाटन हुनेछ । त्यसपछि तपाईँ कहिल्यै पनि चुक्नु हुने छैन, कहिल्यै पनि भ्रमित हुनुहुने छैन, कहिल्यै पनि मर्माहत हुनुहुने छैन । सबैको स्थिति यस्तै सुखद होस्, सबैलाई हार्दिक शुभकामना !

जय गुरुदेव !

# तपाईँ पनि गुरु परिवर्तन गर्न गइरहनु भएको त छैन ?

हामी कहाँ नयाँ फेशन चलेको छ– गुरु परिवर्तन गर्दै हिँड्ने । आफूले भनेको जस्तो भएन कि गुरु फेर्न हतार भइहाल्छ, आफूले सोचे जस्तो भएन कि वैकल्पिक गुरुको खोजी शुरु भइहाल्छ । यसरी गुरु फेर्दा फेर्दा कतिपयले त दर्जनौँ गुरु बनाइसकेका हुन्छन् । गुरु फेर्नेहरूको पनि प्रतिपर्स्धा हुने गर्छ भन्ने सुनेर आश्चर्य पनि लाग्छ । तर एकपछि अर्को गुरु फेर्ने फेशन त चलेकै छ, अर्कोतिर कसले कति बढी गुरु फेर्न सक्छ भन्ने होडबाजीले यस फेशनलाई अझै विकराल बनाइदिएको छ । 'पल्लाघरे माइलाको त दश-दशजना गुरु छन्, मेरा किन बाह्र नहोऊन् ?' अर्कोले पनि भनी टोपल्छन्– 'दत्तात्रेयजीका त चौबीस गुरु थिए रे, मेरा त जम्मा पाँचोटा त पुगे नि !'

यसरी गुरु परिवर्तन गर्नेहरूको होडमा आश्रमका केही साधक साधिकाहरू पनि लागे भन्ने सुनेर दुःख लाग्छ । अस्ति मात्रै त हो जस्तो लाग्छ आश्रममा केही भूकम्प आए जस्तै परिवर्तनको तरङ्ग उठेको । हिजो मात्रै हो जस्तो लाग्छ आश्रममा विचार, भावना, सिद्धान्तमा मतभिन्नता भएको । विचारको लडाइँमा, सिद्धान्तको युद्धमा, नैतिक र अनैतिक अनि जायज र नाजायजको घम्साघम्सीमा कति साधक साधिका पिल्सिए, यो कसैबाट छिपेको छैन । केही हदसम्म सत्यको दिग्विजय भएको छ, चारैतिर छाएको उकुसमुकुस हट्ने क्रममा छ । तर यस क्रममा गुरु फेर्नेहरूको होड पनि चलेको देखिन्छ । गुरु फेर्ने आँट त गरे गरे, तर गुरुको न्यूनता केलाउने, उहाँको अस्तित्वमाथि शंका गर्ने, गुरुलाई खसालेर कुरा गर्ने, अन्य गुरुहरूसँग उहाँको तुलना गर्ने जस्ता अति नै निकृष्ट र गुरुद्रोही कुकर्म भइरहेतिर दृष्टि दिने हो भने झनै दुःख मान्नु पर्ने हुन्छ ।

एकजना पुराना साधकले भेट हुँदा भनेका थिए– 'म त अर्कै ठाउँमा गइसकेँ ।' कुरै कुरामा उनले परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको गृहस्थस्वरूप डा. नारायणदत्त श्रीमालीको पनि न्यूनता केलाउन बिर्सनु भएन । परमपूज्य सद्‌गुरुदेवको रचना र कीर्तिहरू राम्ररी अध्ययन नगर्नु भएकोले भ्रम सिर्जना भएको हुन सक्ने सम्भावना केलाउँदा उनले सो विषयमा गुरुदेवबाट लिखित पुस्तक उपलब्ध गराइदिन आग्रह गरे । यसरी पर्याप्त अध्ययन नगरी पाँच सयभन्दा बेसी पुस्तकहरूका जनक गुरुदेवको न्यूनता केलाउने दुस्साहस हुन्छ भने यसमा गुरुदेवको के दोष ?

कसैले गुरुदेवले आफ्नो क्रन्दन सुन्नुभएन भनेर अर्कै गुरु रोजेको स्वीकार्छन् । कसैले आश्रमको परिवर्तित अवस्थाबाट विरक्तिएर गुरु परिवर्तन गरेको भन्छन् । तर जे सुकै कारणबाट भए पनि गुरु त आखिर फेरिए नि ! निराधार र कपोलकल्पित भनाइ र लांछनालाई अघि सारेर गुरु फेर्नुको कुनै अर्थ छैन । यसबाट नामोपराध त हुन्छ नै, गुरुद्रोहीको कलङ्क पनि लाग्दछ । कसैको भनाइ सुनेर गुरु फेर्ने क्रिया त अझै खतरनाक हुन्छ । किनकि यसरी अर्काको भनाइमा लागेर गुरु फेर्नेले फेरि कसैले उचालिदिएमा पुनः गुरु फेर्ने र गुरुलाई नानाथरिको लाञ्छना लाउने बढी सम्भावना हुन्छ । मनोवैज्ञानिक रूपमा विश्लेषण गर्दा पनि आफूले भनेको, आफूले सोचेको जस्तो भएन अथवा आफ्नो अनुकूलका घटना परिस्थितिहरू भएनन्, आफ्नो स्वार्थमा तुषारापात भयो भने मानिसले गुरु

परिवर्तन गर्ने गर्छन्। यस्तो अवस्थामा गुरु परिवर्तन गर्नु अघि एकपटक आफैलाई नियाल्नु उचित हुनेछ । यसो गर्दा लाग्नेछ कि गुरु परिवर्तन त गरियो, तर व्यर्थैमा गरियो। सच्चा शिष्य, भक्तलाई सच्चा गुरुले कहिल्यै पनि निराश गर्नुहुन्न । जो निराश भए, उनले सही रूपमा मागेनन्, जायज कुरा मागेनन् अथवा ईश्वरको विधानअनुसारको उनको माग भएन अथवा आफूमा नै पात्रता थिएन। सद्गुरु त निर्दोष हुनुहुन्छ, सम हुनुहुन्छ, उहाँ सर्वसमर्थ हुनुहुन्छ, सर्वज्ञ हुनुहुन्छ, अकारण करुण हुनुहुन्छ। हामीले मागेका कुराहरू, आफूले खोजेका कुराहरू कतिसम्म जायज छन्, ती कुराहरूको चिन्तन बिना मागहरूको पूर्ति नभएको अवस्थामा सरासर गुरुदेवको न्यूनता केलाउँदै गुरु फेरिहाल्ने प्रवृत्ति बडो घातक हुन सक्छ । यसबाट आफ्नो लक्ष्यको गतिमा पनि सुस्ती छाउन सक्छ। सामान्य उदाहरणबाट पनि यसलाई बुझ्न सकिन्छ । जाडो महिना भएको हुनाले चियाकै उदाहरण लिँदा बेस होला । किट्लीमा कसैले चिया पकाउँदा कहिले एउटा चुल्होमाथि बसाल्ने, फेरि केही समयपछि अर्को चुल्होमा बसाल्ने, अनि पुन: केही समय अर्के चुल्होमा बसाल्ने गर्दछ भने किट्लीको चिया उम्लिन धेरै समय लाग्ने हुन्छ। यसको सट्टा एउटै चुल्होमा किट्लीलाई बसालेर आगो दन्काउने हो भने चिया चाँडै उम्लिनेछ । ठीक यसरी नै गुरु फेर्नु पनि थरिथरिका चुल्होमा किट्ली बसाले जस्तै हो। यसबाट लक्ष्यमा पुग्न धेरै समय लाग्छ। बरु अटुट आस्था र विश्वासका साथ एउटै सद्गुरुमा विश्वस्त भएर अगाडि बढेमा त्यो नै सर्वोत्तम हुन्छ भन्ने महापुरुषहरूको भनाइ पाइन्छ ।

जसको मनस्थिति डावाँडोल छैन, जो प्रतिकूल परिस्थितिमा पनि अडोल र स्थिर छ, जसले गुरुदेवप्रति पूर्ण विश्वास गरेको छ, उसका लागि जतिसुकै ठूला प्रतिकूलताहरू पनि ऊर्जा दिने हुन्छ। यस्तो प्रतिकूलतामा त उसले अझै बेसी ऊर्जा प्राप्त गर्दछ। प्रतिकूलताका बावजूद ऊ प्रार्थना, साधना, ध्यान आदिमा बढी संलग्न हुन्छ भने यही कुरा उसका लागि ऊर्जाको स्रोत हुने हुन्छ । यसको विपरीत यदि प्रतिकूलतासित मात्रै होइन गुरुदेवसित पनि भागेको खण्डमा ऊ अस्थिर, अधीर हो भन्ने सिद्ध हुन्छ। उसको यही अस्थिरता र अधीरता अर्को ठाउँमा पनि विघ्नकारक हुन सक्छ। जो अडोल छ, उसले नै पाउने हो। श्रद्धा, विश्वास र निष्ठापूर्वक एउटै गुरुमा प्रतिबद्ध र समर्पित शिष्यका लागि सबै सम्भव हुन्छ। असम्भव त उसको लागि हुन्छ जो संशयी छ, जसमा विश्वास र निष्ठाको अभाव छ, जसमा अधीरता छ । विश्वासीका लागि त सद्गुरु नै सबथोक हुनुहुन्छ। सद्गुरु त सर्वत्र व्यापक सत्ता हो, उहाँ त सर्वज्ञ, सर्वान्तर्यामी, सर्वसमर्थ हुनुहुन्छ। उहाँ नै सबैमा गुरुत्व रूपमा विराजमान् हुनुहुन्छ। कसैले गुरु परिवर्तन गर्छ भने उसको अज्ञानता मात्रै ठहरिनेछ । जसको निवास सबैको हृदयमा छ, जो सदा सर्वदा साक्षी भएर सबै जीवात्मामा बस्नुभएको छ, उहाँको सत्ता त सबैतिर छ। रूप मात्रै फरक हो, गुरुत्व त आखिर एउटै हो। त्यसैले गुरु फेर्दैमा तत्त्व फेरिइने होइन । तत्त्व त सदा सबै ठाउँमा प्रेमरसले युक्त भएर रहनु भएकै छ। केवल स्थूल वस्तुको परिवर्तन मात्रै हुने हो। प्रज्ञावानका लागि सर्वत्र गुरु नै देखिनुहुन्छ । तत्त्व चिन्तकका लागि सबैतिर गुरु नै त हुनुहुन्छ। स्थूलतातिर प्रोत्साहित हुनेका लागि लामो जुङ्गा पालेका गुरु, गेरुवा वस्त्र लाएका गुरु, कपाल लामो पालेका गुरु, फलाहारी गुरु, दुग्धाहारी गुरु, ब्रह्मचारी गुरु, गृहस्थ गुरु आदि इत्यादि गुरुहरूको बाह्य स्वरूपले नै प्रश्रय पाउने हुन् । तर तत्त्वदर्शीका लागि भने यी सबै प्रकारका गुरुहरूमा निहित गुरुत्व नै सर्वोपरि हुन्छ, यही नै सत्य र ऋत हुन्छ। बाहिरी अन्य स्वरूप त अस्थिर हुन्, अनित्य छन्। त्यसैले सच्चा शिष्य यही गुरुत्वलाई चिनेर एउटै सद्गुरुको शरणमा पर्छन् र जीवनलाई धन्य धन्य गर्छन्। यी सबै धन्य आत्माहरूलाई साधुवाद !

जय गुरुदेव !

# नाथ सम्प्रदायमा
# चौरासीनाथ

नाथयोगीहरूको चर्चा गर्ने क्रममा हामीले चौरासी सिद्धभित्र पर्ने नाथयोगीहरूको चर्चा गर्दै आइरहेका छौं । चौरासी सिद्धहरूको नाम ठोकुवाका साथ भन्न नसकिए पनि विभिन्न समयमा विभिन्न नाथयोगीहरूको नाम उल्लेख भएको पाइन्छ । विद्वान् लेखकहरूले विभिन्न नवनाथ, चौरासी सिद्धहरूको नामका साथमा अन्य नाथयोगीहरूको नाम पनि उल्लेख गरेको पाइन्छ । भारतका विद्वान् लेखकहरूले विभिन्न सूचीहरूमा उल्लेख गरेका नाथयोगीहरूको नामलाई एकीकृत गर्दा विश्वसनीयताको आधारमा सिद्धहरूको सङ्ख्या उल्लेख गरेको पाइन्छ । स्व. डा. हजारीप्रसाद द्विवेदीले नाथयोगीहरूका बारेमा लेख्नुभएका ग्रन्थहरूमा सूचीबद्ध गर्नुभएका १ सय उनान्तीस सिद्धहरूको नाम यहाँ उल्लेख गर्नु सान्दर्भिक होला ।

१. अक्षय
२. अधोमाधव
३. अचित
४. अजपानाथ
५. अजपनाथ
६. अतिकाल
७. अनादिनाथ
८. अवध
९. आदिनाथ
१०. उदयनाथ
११. उन्मन
१२. एकनाथ
१३. कनखल
१४. कमल कगारि
१५. कंथाधारी
१६. कन्हडी
१७. करवत
१८. काणेरी
१९. काण्डालि
२०. कान्ह
२१. काभरी
२२. कापालि
२३. काल
२४. कालभैरवनाथ
२५. कुभारी
२६. कूर्मनाथ
२७. केदारिया
२८. कोरटक
२९. खण्डकामलिक
३०. गगनपा
३१. गमार
३२. गिरिवर
३३. गाहिनीनाथ
३४. गोपीचन्द्रनाथ
३५. गोरक्षनाथ
३६. गोविन्द
३७. घोडा चूली
३८. चर्पट
३९. चाटल
४०. चम्पक
४१. चाँडन
४२. चाभरी
४३. चिपिल
४४. चौरंगी
४५. जडभरत
४६. जालन्धर
४७. जीवन
४८. ज्ञाननाथ

४९. रोंगी
५०. ढिण्ढिवी
५१. देण्टस
५२. ततिपा
५३. तुजी
५४. तारकनाथ
५५. दण्डनाथ
५६. दत्तात्रेय
५७. दारिपा
५८. देवदत्त
५९. डौंली
६०. धर्मपापतंग
६१. धोगपा
६२. धोरंग
६३. धोवी
६४. नागनाथ
६५. नागवाला
६६. नागवोध
६७. नार्गाजुन
६८. नाचना
६९. नित्यनाथ
७०. निरंजन
७१. निर्डप
७२. विृत्तिनाथ
७३. निमनाथ
७४. भेचक
७५. पलिहिह
७६. पातलीभद्र
७७. भासल
७८. पूज्यपाद
७९. प्रभुदेव
८०. वटुक
८१. बाकलि
८२. भरी
८३. भद्र (१)
८४. भद्र (२)
८५. भमरी
८६. भर्तुहरि
८७. भवतार्जि
८८. भल्लरि
८९. भदि
९०. भानु
९१. भिषाल
९२. भीमनाथ
९३. भीषण
९४. भीलो
९५. भुरुकुटी
९६. भूतनाथ
९७. भुम्बरी
९८. भैरव
९९. भगरधन
१००. मत्स्येन्द्रनाथ
१०१. मन्थान भैरव
१०२. मय
१०३. भवह
१०४. मलयार्जुन
१०५. महाकाल
१०६. माणिकनाथ
१०७. मालीपाव
१०८. मीन
१०९. भेखल
११०. भेनुरा
११०. विकराल
११९. विलेशय
१२०. वीरनाथ
१२१. साम्ति
१२२. सारंग
१२३. सिल्हपाद
१२४. सिल्हवाध
१२५. सियारी
१२६. सुरानन्द
१२७. सूर्यनाथ
१२८. हरिश्चन्द्र
१२९. हालिपा

क्रमश:

**न मे शक्तिर्देवः समविषम भावं विगलितं,**
**रहस्यं नैवं ते परिगदितुमखिलं परिगतं ।**
**न मे श्रद्धाभक्तिः बहुविधतमोध्वंसनदिधौ;**
**परं लब्धुं कामः निखिल ! निखिलं ज्ञानमनद्यम् ॥**

हे गुरुदेव ! मेरो मनमा उठ्ने अनेकौं निरर्थक विचारहरुलाई निरस्त गर्नका लागि ममा सामर्थ्य छैन, हजूरको साधनात्मक दिव्य एवं अलौकिक रहस्यलाई पनि म जान्दिन । अज्ञानजनित प्रबल अन्धकारलाई दूर गर्न श्रद्धा र भक्ति पनि ममा छैन । तर पनि हजूरको त्यस पावनतम् ज्ञानलाई प्राप्त गर्नका लागि म प्रबल आकांक्षी छु ।

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौं । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौं

## भाग्य रेखा

(गतांकबाट क्रमश:)

१. **प्रथमावस्था** : यस प्रकारको भाग्यरेखा सर्वोत्तम मानिन्छ । यो रेखा जति धेरै स्पष्टरूपमा गहिरो र निर्दोष हुन्छ, उति नै राम्रो मानिन्छ र उति नै धेरै श्रेष्ठ फल प्राप्त हुन्छ । यस कुराको सधैं ख्याल राख्नुपर्छ कि भाग्यरेखा शनि पर्वतसम्म पुगेको छ भने त्यसलाई शुभ मानिन्छ । तर यदि शनि पर्वतलाई पार गरेर माझी औँलामा चढ्न खोजको देखिन्छ भने त्यसले विपरीत फल दिन्छ । केही हत्केलामा यस रेखा माझी औँलाको दोस्रो पौरसम्म पुगेको पनि देखिएको छ । यस प्रकारको रेखाले यस्तो व्यक्तिमा महत्त्वाकाङ्क्षा तथा इच्छाहरू आवश्यकताभन्दा बढी हुन्छन् भनेर बुझाउँछ । तर ऊ जीवनमा आफ्ना इच्छाहरूलाई पूरा भएको देख्न भने सक्दैन । यस बढेको भाग्य रेखाले व्यक्तिको बनेका कार्यलाई पनि बिगारिदिन्छ ।

तर यस प्रकारको रेखा माझी औँलामा चढेको छैन तर शनि क्षेत्रमा मात्रै सीमित भएर रोकिएको छ भने यस्तो रेखा शुभ फलदायक मानिन्छ । यदि भाग्य रेखाको अन्तिम बिन्दुमा दुई सिरा फाटिएर एउटा सिरा शनि पर्वतमा अडिएको छ र दोस्रो सिरा गुरु पर्वतसम्म पुगेको छ भने त्यस व्यक्ति जीवनमा धेरै माथिल्लो पदमा पुग्दछ । यस्तो व्यक्तिलाई सामान्य घरमा जन्म लिएर पनि उच्च पद प्राप्त भएको देखिएको पाइन्छ ।

यदि भाग्यरेखालाई शनि पर्वतमा तेस्रो रेखाले काट्छ भने उसको जीवनमा बाधाहरू आइलाग्छन् । धेरै बाधाहरूका बावजूद पनि ऊ जीवनमा सफल हुन्छ । बाधक रेखाहरू जति कम हुन्छन्, त्यति नै राम्रो मानिन्छ ।

२. **द्वितीयावस्था** : सामुद्रिक शास्त्रअनुसार यस प्रकारको रेखा पनि श्रेष्ठ मानिन्छ । तर यस प्रकारको रेखा माझी औँलामा चढ्न खोजको देखिन्छ भने यसलाई बाधाहरू उत्पन्न गर्ने मानिन्छ । यस्तो व्यक्ति साहसिलो भएर पनि चिन्ताहरूबाट घेरिएको हुन्छ । यस्तो व्यक्तिलाई जीवनमा सफलता अति नै कठिनाईले प्राप्त हुन्छ ।

जसको हत्केलामा यस प्रकारको रेखा शनि पर्वतमा पुगेको देखिन्छ, उसले यदि बालककालमा चिन्ताहरू भोगेका भए पनि पछि गएर आफ्नो प्रयत्नले उन्नति गर्दछ । २८ औं वर्षमा उसको पूर्णरूपमा भाग्योदय हुन्छ ।

यस्तो व्यक्ति संकोची स्वभावको हुन्छ तथा तुरुन्त निर्णय लिनमा समर्थ हुँदैन । यदि यस प्रकारको भाग्यरेखामा बाङ्गातिङ्गा रेखाहरू छन् भने

त्यसको जीवनमा कैयौँ पटक बाधाहरू आउँछन् र अथक परिश्रमपछि ऊ जीवनमा सफल हुन्छ ।

यदि भाग्यरेखाका साथसाथै जीवनरेखा पनि बढेको देखिन्छ भने यस्तो रेखा शुभ मानिन्न । जीवनरेखा र भाग्यरेखाको परस्पर मिलन वा आपसमा लेपेटिइनु पनि अनुकूल मानिन्न ।

३. **तृतीयावस्था** : यो रेखा जति स्पष्ट हुन्छ, त्यति नै बढी शुभ मानिन्छ । यस्तो भाग्यरेखा जीवनरेखालाई काटेर नै अगाडि बढ्छ । तर जुन ठाउँमा उसले जीवनरेखालाई काट्छ, जीवनको त्यस अवधिमा उसले धेरै नै चिन्ताहरूको सामना गर्नुपर्ने हुन्छ । यस्तो स्थितिमा त्यो व्यक्ति भयङ्कर दुर्घटनामा घायल हुन सक्छ, तात पल्टिन सक्छ तथा उसले आत्महत्या पनि गर्न सक्छ ।

यो रेखा शुक्र पर्वतबाट निस्कन्छ । अत: यस कुरालाई सही सम्झनुपर्छ कि त्यस व्यक्तिको भाग्योदय विवाहपछि नै हुन्छ । यस्तो व्यक्ति प्रेमको मामिलामा अति नै बढाइचढाइ गर्छ तथा ससुरालीबाट धेरै धन प्राप्त गर्दछ । यस्तो व्यक्तिको स्त्री सुन्दर, आकर्षक तथा तडकभडकसँग रहने हुन्छ ।

४. **चतुर्थावस्था** : यस्तो भाग्य रेखा पनि शुभ मानिन्छ । तर यस्तो व्यक्तिको भाग्योदय यौवनावस्थापछि नै हुन्छ । शिक्षाको क्षेत्रमा यस्तो व्यक्तिलाई बारम्बार बाधाहरू आउँछन् र यस्तो व्यक्तिले उच्च शिक्षा प्राप्त गर्न सक्दैन ।

यदि यस प्रकारको भाग्यरेखासित कुनै सहायक रेखा हुँदैन भने व्यक्तिले जीवनमा आफूले गरेका गल्तीहरूमा पछुताइरहन्छ । मित्रहरूको सहयोग उसलाई प्राप्त हुँदैन तथा जीवनमा उन्नतिका लागि उसलाई कठोर परिश्रम गर्नुपर्ने हुन्छ । उसको भाग्योदय अत्यधिक ढिलोसँग हुन्छ र कसैको सहयोग बिना नै उसले उन्नति गर्दछ । यस्तो व्यक्तिले प्रहरी वा सैनिक विभागमा विशेष उन्नति गर्दछ ।

५. **पंचमावस्था** : यो रेखा हत्केलामा अनुकूल मानिन्छ । तर यसले यदि माझी औँलाको छोरसम्म पुग्ने प्रयत्न गरेको देखिन्छ भने त्यस व्यक्तिले जीवनमा सफलता प्राप्त गर्दैन । ऊ अगाडि बढ्नका लागि बराबर प्रयत्न गर्दै रहे पनि उसले बारम्बार असफलताको सामना गर्नुपर्ने हुन्छ । कुनै महत्त्वपूर्ण व्यक्तिको सहयोगबाट नै उसले उन्नति गर्न सक्छ ।

जीवनको मध्यकालमा यस्तो व्यक्तिले विकास गर्दछ, यस्तो व्यक्ति सफल चित्रकार अथवा साहित्यकार हुन्छ । भन्नुको तात्पर्य यो हो कि यस्तो व्यक्ति कुनै एक क्षेत्रमा पारंगत हुन्छ ।

यदि यस्तो रेखा जीवनमा अगाडि गएर टुटेको देखिन्छ भने वा लहरदार बनेको छ भने त्यस व्यक्तिको उन्नति हुन पाउँदैन र उसले निरन्तर आफ्नो भाग्यलाई धिक्कार्छ । यदि यस्तो रेखालाई बाङ्गातिङ्गो रेखाले काट्छ भने उसले जीवनमा बाधाहरूको सामना गर्नुपर्ने हुन्छ । यस्तो व्यक्ति सफल देशभक्त हुन्छ तथा वृद्धावस्था अति नै सुखमय हुन्छ ।

६. **षष्ठावस्था** : जसको हत्केलामा यस प्रकारको भाग्यरेखा देखिन्छ, ऊ अति नै सौभाग्यशाली मानिन्छ । यस प्रकारको व्यक्तिको भाग्योदय ३६ औँ वर्षपछि हुन्छ । जीवनको ३६ देखि ४२ औँ वर्षको बीचमा उसले आश्चर्यजनक रूपले उन्नति गर्दछ ।

यस्तो व्यक्तिको प्रारम्भिकजीवन अत्यन्तै कष्टदायक हुन्छ । तर उसको यौवनकाल र उसको वृद्धावस्था अत्यन्त सुखकर मानिन्छ र आफ्नो जीवनको अन्तिम उत्तरकालमा उसलाई धन, मान, यश, प्रतिष्ठा आदि प्राप्त हुन्छ ।

यदि यस्तो रेखा बीच-बीचमा टुटेको छ भने उसको भाग्यमा बाधाहरू आउँछन् । यदि त्यस रेखामा वृत्तको चिन्ह देखिन्छ भने यस्तो व्यक्ति भाग्यहीन मानिन्छ । यदि भाग्यरेखाबाट कुनै सहायक रेखा निस्केर गुरु पर्वततिर जान्छ भने उसले आफ्नो जीवनमा पूर्ण सफलता प्राप्त गर्दछ ।

# अश्वगन्धा

**वानस्पतिक विवरण**

*वानस्पतिक परिवार : सोलेनेसी* (Solanaceae)
*वानस्पतिक परिवार : विथानिया सोम्निफेरा* (Withania somnifera (L) Dunal)
*नेपाली नाम :अश्वगन्धा ( )*
*अंग्रेजी नाम : विन्टर चेरी* (Winter Cherry)

यसको ताजा जराबाट घोडाको जस्तो गन्ध आउने (smelling like horse) भएकोले नै यसलाई अश्वगन्धा भनिएको हुन सक्दछ। अश्वगन्धा खुर्सानीको वानस्पतिक परिवार (solanaceae) मा पर्ने वनस्पति हो । यो एक वर्षे सदाबहार झाडीको उचाई १.५ मीटरसम्मको हुन सक्छ । यो हाँगेदार वनस्पतिबाट एकनासले हाँगाहरू निस्केका हुन्छन् जुन अति मनमोहक हुन्छ । हाँगाहरू मसिना झूसले ढाकेका हुन्छन् । यसको जरा ५० से.मी. सम्म लामो र २ से.मी. सम्म फुस्रो र सेतो रङको हुन्छ। पात अण्डाकारको १० से.मी. लामा र ५ से.मी. सम्म चौडा झूसले ढाकिएको हुन्छ । फूलहरू पहेँलो हरियो रङको झुप्पामा हुन्छन् । फल भने ७ मिटरसम्म व्यास भएको खुर्सानीको बिउजस्तै सुन्तले रङको हुन्छ । यसमा आषाढ-श्रावणमा फूल फुल्दछ र पुष-माघमा फल लाग्दछ ।

अश्वगन्धा उष्ण तथा उपोष्ण जलवायु भएको क्षेत्रका देशहरूमा भारत, अफ्रिका र भूमध्यसागरीय क्षेत्रमा प्राकृतिक रूपमै पाइन्छन् भने भारतमा यसको खेती व्यापक रूपमा गरिएको पाइन्छ। नेपालमा भने भर्खरै यस खेतीको शुरुआत भएको छ ।

**रासायनिक विवरण**

यसको मूल उपयोगी अङ्ग जरामा एक किसिमको उडनशील तेल (volatile oil), खेदार विथेनियोल (Withaniol $C_{25}H_{35}O_5$) नामक पदार्थ, हेन्ट्रियाकोन्टेन (Hentriacontane), फाइटोस्टेरोल तथा वोसीय (Fatty) वा तेलीय पदार्थ पाइन्छन् ।

यसमा प्रमुख ३ किसिमका क्षारामहरू (Alkaloids) पाइन्छन्, जसमध्ये सोम्निफेरिन (Somniferin, $C_{12}H_{16}N_2$) हुन्छ । धेरैजसो क्षारामलाई ४५ प्रतिशत अल्कोहलमा निस्सारित गरेर प्राप्त गर्न सकिन्छ । प्रमुख क्षारामहरूमा निकोटिन, सोम्निफेरिन, सोम्निफैरनिन, विथैनिन, विथैनेनिन, स्यूडोविथेनिन, ट्रोपिन, स्यूडोट्रोपिन, कोलिन, कुस्को हाइग्रिन, ऐतिहाइग्रिन तथा एनाफेरिन

हुन् ।

सबै बाह्य अङ्गहरू (All aerial parts) मा प्रोटिन र अमिनो अम्लहरू पाइन्छन् । विथासोम्निफेरिन 'ए' मा ४ किसिमका स्टेरोआइडल ल्याक्टोन (Steroidal lactones) पाइने भएकोले यसलाई विथानालिड्स् भनिन्छ । अश्वगन्धाको जरामा पाइने १३ किसिमका क्षारामहरूको मात्रा ०.१३–०.५१ प्रतिशतसम्म हुन्छ भने केही विरुवामा ४.३ प्रतिशतसम्म पाइएका छन् । क्षारामका अतिरक्त जरामा ग्लूकोसाइड, विथानिओल, माड, शर्करा र धेरै किसिमका अमिनो अम्लहरू पाइन्छन् ।

मजुमदार (१९५५) ले ८ किसिमका एकनासे प्रमुख तत्त्वहरू छुट्याएका थिए, जसमा विथानिन प्रमुख क्षाराम, जराको मात्रा ३८ प्रतिशत (पुरै क्षाराममध्ये) थियो । यस बाहेक सोम्निफेरिन, सोम्निन, विथानानिन, स्यूडोविथानिन, विथासोम्निन (कोमेलो एट अल १९६०), ढाला एट अल १९६१, खफाजी एट अल १९६१, रोथ एट अल, १९६१) यिनीहरूले नै यसलाई आफ्नो रङ्गीन चित्र छाप्ने (Chromograph) अध्ययनबाट स्थापित गरेको पाइन्छ ।

पातहरूमा पाइने क्षाराम, मुख्य रूपले विथैनोन, विथैफेरिन ए हो । फलहरूमा अमिनो अम्लका साथसाथै दूध जमाउने इन्जाइम (Milk Coagulating Enzyme), जसमा २ किसिमका रस्टरहरू र स्वतन्त्र अमिलो अम्लहरू तेलीय पदार्थ (Fatty oil), सुगन्धित तेल (Esssential oil) र क्षाराम पाइन्छन् ।

## अश्वगन्धाका केही विकसित जातहरू

भारतमा विकसित गरिएका जात–

१) जवाहर अश्वगन्धा २०, २२, १३४ : यसले ७ क्विण्टलसम्म सुकेका जरा प्रति हेक्टरको उत्पादन दिन्छ । जराबाट ०.१–०.५ प्रतिशतसम्म क्षाराम (Alkaloid) को मात्रा प्राप्त हुन्छ ।

२) WS १०, २२ : यसमा ८–९ क्विण्टलसम्म प्रति हेक्टर सुकेको जराको उत्पादन र क्षारामको मात्रा ०.२–०.३ प्रतिशतसम्म हुन्छ ।

३) WSR, पोषिता र रक्षिता : यसको उत्पादन १०००–१२०० किलो/हेक्टर सुख्खा जरा र क्षारामको मात्रा ०.३–०.५ प्रतिशतसम्म हुन्छ ।

## औषधीय गुणहरू (Medicinal Properties)

भारतमा औषधिको रूपमा यसको प्रयोग विभिन्न रोगमा ४,००० वर्षभन्दा पहिलेदेखि नै हुँदै आएको छ । नेपालमा पनि प्राचीनकालदेखि नै यसको प्रयोग स्थानीय रूपमा (घरेलु औषधिमा) हुँदै आएको तथ्य कसैबाट लुकेको छैन । अश्वगन्धा आयुर्वेदिक र युनानी दुवै औषधीय पद्धतिमा व्यापक रूपमा प्रयोग हुँदै आइरहेको छ । साथै यसमा पाइने विभिन्न बहुमूल्य क्षारामहरूलाई आधुनिक चिकित्सा (Allopathy) पद्धति समेतमा प्रयोग हुन्छ ।

१) तनाव प्रतिरोधी, स्वस्थापक र रसायन गुणधर्मी (Anti Stress Adoptogenic and Rejuvenating Effect) : औषधीय मात्रा झोलको रूपमा खुवाउनाले मानसिक रोग, स्नायु विकृति, शरीरको वजन कम गर्नु, मधुमेह र अन्य जैविक मापदण्ड अपनाउनाले नशासम्बन्धी रोग र चिन्तामा सुधार ल्याई मानिसलाई स्वस्थ बनाउँछ ।

२) ऐठन (मरोड) प्रतिरोधी प्रभाव (Anti spasmodic Effect) : अश्वगन्धामा पाइने विभिन्न किसिमका क्षारामले शान्तिदायक, पेटमा हुने विभिन्न खाले ऐठनल दुखाई र पीडामा लाभदायक, पाठेघर, श्वासनलिका, कण्ठनली र रगतबाहक मासनलीसम्बन्धी रोगमा धेरै फाइदाजनक सिद्ध भएको छ ।

३) प्रतिजैविक र ट्यूमर प्रतिरोधी (Anti Biotic & Tumour Activity) : विथैफेरिन ए १० मि.ग्रा./एम.एल.को प्रयोगले विभिन्न किसिमका रोगजनक जीवाणु, एरोबिक व्यासिली (Aerobic Bacilli) र रोगजनक ढुसीको वृद्धि

र विकासलाई रोक्दछ। पिपे खटिरा (Ulcer) लाई निको पार्न प्रमुख भूमिका खेल्नुका साथै कार्सिनोमा (Cancer) कोष विभाजनमा एमाइटोटेक विषको रूपमा काम हुन्छ ।

४) शोथ प्रतिरोधी/सन्धि शोथ नाशक (Antio Inflammatory / Anti Arthritic Affect) : विथैफेरिन ए शोथ तथा सन्धि शोथको उपचारमा अति गुणकारी मानिन्छ र यसको कुनै पार्श्व प्रभाव पर्दैन । यो हाइड्रोकोर्टिसोन (Hydrocortisone) भन्दा धेरै शक्तिशाली हुन्छ र यसले सन्धि शोथ निवारणमा सहायक प्रेरकको रूपमा काम गर्दछ। यसबाट बनाइएका औषधिले पीडा हटाउने (Analgesic), ज्वरो हटाउने (Antipyretic), शोथ हटाउने र थकावट आदि हटाउनमा अहं भूमिका खेल्दछ ।

माथि उल्लिखित औषधीय गुणबाहेक अश्वगन्धाले विभिन्न किसिमका रोग निवारणमा अतुलनीय भूमिका खेल्नुका साथै विभिन्न आयुर्वेदिक औषधि तयार गर्नमा यसको प्रयोग हुँदै आएको छ ।

अश्वगन्धा खाद्य पदार्थको उपयोग, ऊर्जा स्रोतमा, यौन र सामान्य दुर्बलतामा, बाथ रोगमा, पिशाब खुलाउन, मादकको रूपमा काम गर्न र शरीरको कार्यसम्बन्धी कुनै किसिमको रोकावटलाई हटाउन धेरै लाभदायक सिद्ध भएको छ ।

जराको प्रयोग नपुंसकता, वातव्याधि, भिरिङ्गी र अनिद्रामा प्रयोग गरिन्छ। यसको पात पोलेको ठाउँमा, श्लैष्मिक झिल्लीको जलनमा, लुतोमा पेटको किरा, जुका मार्नमा, क्षयरोगमा, वृद्धावस्थाको कमजोरी, तन्त्रिका थकान, स्वप्नदोष (Spermatarrheoa), मस्तिष्क थकान, आमवातिक ज्वरोमा, सर्पको टोकाइमा, संघटनात्मक रोगहरूमा, प्रजननसम्बन्धी कमजोरीमा, दृष्टिदोष, दूध बढाउने औषधिमा, ग्रन्थीहरू सुन्निनेमा, काण्डलाई दतिवनको रूपमा दाँत सफा गर्न र पातलाई डढाएर त्यसको धुवाँको सास लिएमा टाउको दुखाई निको हुने आदिको लागि अति हितकर मानिन्छ । पाकिस्तानमा पातलाई तरकारीको रूपमा प्रयोग गरिन्छ। ऊँट र भेँडाका लागि अति उत्तम आहारा मानिन्छ यो । जराको अरू प्रयोगमध्ये वैकल्पिक शक्तिको रूपमा कामोत्तेजक (Aphordisiac) औषधिको रूपमा, विभिन्न अवरोधहरूलाई विसर्जनको माध्यमबाट बाहिर फाल्ने (Deobstruent), अधिकर्ताको रूपमा, शक्तिवर्द्धकको रूपमा, रुघाखोकीमा, जलंधर (Droppy) रोगमा, स्वेत प्रदरमा (Heucorrhoea), मासिक धर्मसम्बन्धी पीडामा (Menstruation Troubles), स्मरण शक्तिलाई प्रव्यर्पण (Restore) गर्न, पोषण शक्ति बढाउन, नशा थाकान हटाउनमा, कण्ठमाला (Scrofula) तथा विभिन्न आयुर्वेदिक औषधि निर्माणमा अतुलनीय काम गरेको तथ्य कसैबाट पनि लुकेको छैन ।

अश्वगन्धा घृता, अश्वगन्धारिष्ट, महामाष तेल, नारायण तेल, अश्वगन्धा चूर्ण, अश्वगन्धा क्याप्सुलहरू वाजीकरण शक्ति, धम्की, छाती दुखेमा, श्वास-प्रश्वाससम्बन्धी रोग र दम समेतमा उपयोग गरिन्छन्। व्यापारिक प्रयोगमा यसको जरा र पात दुवै बिक्री भए पनि बजारमा जराको राम्रो माग रहेको पाइएको छ ।

उपरोक्त वर्णित उपयोगको अतिरिक्त कैंडीडारुगणता (Candidiasis), रुघाखोकी, झाडापखाला (Diarrhoea), विसर्प (एरिसिपेल्स), कम्मरको पीडा (Lunbago), सुख्खारोग, पागलपन, सिफिलिस, क्षयरोग, टाइफाइड, नाडीवल्य, दिपन-पाचन एवं अपस्मार आदि रोगहरूमा यसको प्रयोग गरिन्छ । करिव १५० वा सोभन्दा बढी आयुर्वेदिक एवं युनानी दुवै किसिमका औषधीय पद्धतिहरूमा व्यापक प्रयोग भएको पाइन्छ ।

फर्मास्यूटिकल्स कम्पनीहरूले अश्वगन्धाको एक्सट्रेक्ट पूरकको रूपमा शक्ति वृद्धिकरण गरी हर्बल चिया, पाउडर, ट्याब्लेट, सिरप आदि निर्माण गर्ने गरेका छन्। यसको जरा एक्सट्रेक्सबाट स्नायु दौर्बल्य, सामान्य दौर्बल्य, मानसिक विकास र अनिद्रा, थकान, श्वासजन्य कफरोग, रक्त अल्पता, मुखपाक, बाँझोपन, क्षयकास तथा मलेरियाजन्य रोगहरूको दुर्बलतामा प्रयोग हुने औषधिहरू बनाउन सकिन्छ ।

*('सांग्रीला जनस्वास्थ्य'बाट)*

## २०६७ पौष महिनामा पर्ने चाडपर्वहरु

| | |
|---|---|
| पौष १ गते | **तान्त्रोक्त बगलामुखी हवन**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| पौष २ गते | मोक्षदा एकादशी |
| पौष ५ गते | **श्री शिव गोरक्ष हवन** |
| पौष ६ गते | **दिव्य गुरु महोत्सव**<br>**तान्त्रोक्त वटुक भैरव हवन**<br>**तान्त्रोक्त गणपति हवन**<br>योमरी पूर्णिमा |
| पौष ७ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| पौष १० गते | क्रिसमस डे |
| पौष १३ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| पौष १५ गते | तमु ल्होसार |
| पौष १६ गते | सफला एकादशी |
| पौष २८ गते | अष्टमीव्रत, गोरखकाली पूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १० :00 बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५ :00 बजे-आरती**

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

## गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

## २०६७ पौष महिनाका शुभ समयहरू

**पौष ४, ११, १८ र २५ गते (आइतवार)**
श्रेष्ठ– दिन ७:३६–१०:००, १२:२४–२:४८
रात्रि ७:३६–९:१२,११:३६–२:००

**पौष ५, १२, १९ र २६ गते (सोमवार)**
सर्वश्रेष्ठ– दिन ९:१२–१०:४८, ३:३६–६:००
श्रेष्ठ– दिन ६:००–९:१२, १:१२–३:३६
रात्रि ८:२४–११:३६, २:००–३:३६

**पौष ६, १३, २० र २७ गते (मंगलवार)**
सर्वश्रेष्ठ– दिन १२:२४–२:४८
श्रेष्ठ– दिन ६:००–७:३६,१०:००–१०:४८
रात्रि ८:२४–११:३६,२:००–३:३६

**पौष ७, १४, २१ र २८ गते (बुधवार)**
सर्वश्रेष्ठ– दिन ६:४८–८:२४
श्रेष्ठ– दिन ८:२४–११:३६
रात्रि ६:४८–१०:४८, २:००–४:२४

**पौष १, ८, १५, २२ र २९ गते (बिहीवार)**
सर्वश्रेष्ठ– दिन ५:१२–६:००
श्रेष्ठ– दिन ६:००–६:४८,१०:४८–१२:२४,३:१२–५:१२
रात्रि १०:००–१२:२४

**पौष २, ९, १६, २३, ३० गते (शुक्रवार)**
सर्वश्रेष्ठ– दिन ४:२४–६:००
रात्रि १:१२–२:००
श्रेष्ठ– दिन ९:१२–१०:२४,२:००–४:२४
रात्रि ८:२४–१०:४८

**पौष ३, १०, १७ र २४ गते (शनिवार)**
सर्वश्रेष्ठ– दिन ५:१२–६:००
श्रेष्ठ– दिन १०:४८–२:००
रात्रि ८:२४–१०:४८,१२:२४–२:४८,४:२४–६:००

**नोट:**
दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म
रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म

*परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सञ्चालन हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए–

### केन्द्रीयरुपमा सम्पन्न हवन कार्यक्रमहरु

मंसीर ६ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे। मंसीर ७ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे। मंसीर १ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे। मंसीर २ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे।

### सम्पर्क कार्यालयहरुमा सम्पन्न मासिक हवन कार्यक्रमहरु

मंसीर १ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे। मंसीर २ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे। मंसीर ७ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे। मंसीर ७ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे।

### गो.नि.वा.को माघ अंकबारे जानकारी

पूजनीय गुरुमाता भगवती देवी श्रमालीज्यूको अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविरको अवसरमा गोरक्ष निखिल वाणीको माघ अंक विशेषांकरूपमा प्रकाशित हुने भएको र उक्त विशेषांकको विमोचन अभिनन्दन समारोहमा हुने भएकाले यसबाट पत्रिका समयमा उपलब्ध हुननसक्ने जानकारी गराउँदै यसबाट पाठकवर्गमा पर्नजाने असुविधा प्रति क्षमा याचना गर्दछौं।

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरूदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजज्यू) धर्तीमा अवतरित हुनु भएको प्रत्येक अंग्रेजी महिनाको २१ तारीखको पुनीत अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना दिव्य गुरू महोत्सवलाई मनाउँदै आइरहेको छ। यसै क्रममा गत मंसीर ५ गते तदनुसार २१ नोभेम्बर, २०१० का दिन बसुन्धरा आश्रम परिसरमा उक्त कार्यक्रम सम्पन्न भयो।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिकरूपमा सस्वर पाठ, गुरु पादुका पूजन, गुरू मन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रम रहेका थिए।

कार्यक्रममा गुरु पूजन गर्ने सौभाग्य सावरपन्थी साधक रामजी अर्याल, कुलराज खरेल, पवित्रा खरेल, किस्मत खरेल र कंचन खरेलले प्राप्त गर्नुभएको थियो। आरतीपछि भजन कीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए। उक्त अवसरमा सावरपन्थी साधक रामजी अर्यालले बोल्नुभएको थियो भने स्वागत मन्तव्य गुरू सेवा दलका सदस्य साधक दिनकुमार के. सी. ले दिनुभएको थियो।

कार्यक्रममा सम्पर्क कार्यालय तीनकुनेबाट नृत्य, आरती संचालन केन्द्र बबरमहलबाट भजन र विद्याश्रमबाट भजन र नृत्य प्रस्तुत भएको थियो। कार्यक्रममा अन्य साधक साधिकाहरूको तर्फबाट पनि भजन प्रस्तुत भएको थियो।

### तीनकुनेमा बृहस्पतिबार गुरूपूजन

काठमाडौं तीनकुनेमा रहेको सम्पर्क कार्यालयमा गत मंसिर २ गते बिहीबार गुरुपूजन सम्पन्न भयो। उक्त पूजन प्रत्येक बिहीबार सम्पन्न हुनेछ।

### कार्यकर्ता तालिमसम्बन्धी सूचना

विशेष कारणवश विगत केही समयदेखि रोकिएको कार्यकर्ता तालिम २०६७ फाल्गुण देखि पुन: शुभारम्भ हुने तथा फाल्गुण २० र २१ गते गुरुसेवा दलको तालिम सम्पन्न हुने जानकारी सम्बन्धित सबै कार्यकर्तालाई गराइन्छ।

# रिफ्रेशमेन्टबाट सिकेका कुरा

गत मंसिर ११ गते सिद्धाश्रम शक्ति केन्द्रले धेरै समयपछि काठमाडौँ उपत्यकाका कार्यकर्ताहरुको रिफ्रेशमेन्ट कार्यक्रम (पुनर्ताजगी कार्यक्रम) सम्पन्न गऱ्यो । मध्याह्न १२ बजे शुरु भएको उक्त कार्यक्रम अति नै सौहार्दपूर्ण वातावरणमा सम्पन्न भएको थियो भने उक्त कार्यक्रममा अहिलेसम्मका सिफ्रेशमेन्ट कर्यक्रमहरुमध्ये सबैभन्दा ठूलो संख्यामा उपस्थिति रहेको थियो ।

कार्यक्रमको आरम्भ गुरु सेवा दलका सदस्य देवेन्द्र विक्रमले स्तुति वन्दना, आवाहन भजनबाट गर्नुभएको थियो भने सोही दलका शकुन्तला तिमिल्सिनाले स्वागत मन्तव्यअन्तर्गत गुरु तत्त्वको महिमा प्रकाश पार्नुभएको थियो । त्यस्तै सोही दलका हरि भट्टराईले विपरीत स्थितिसँग जुध्दै अघि बढ्नु नै शिष्यत्व हो भन्ने अभिप्रायका साथ आफ्नो मन्तव्य राख्नुभएको थियो ।

त्यस्तै, आफ्नो भनाइ राख्ने क्रममा सावर मातृका विन्देश्वरी वरालले हालैका घटनाहरुको स्मरण गराउँदै भन्नुभएको थियो, 'बिना कारण, बिना गल्ती कारवाही गऱ्यो, निष्काशन गऱ्यो, भोलि तपाईंहरुलाई पनि यस्तै गर्छ भनी सिधासाधा गुरु सेवक सेविकाहरुलाई भड्काउँदै घर घरमा, जिल्ला जिल्लामा फोन गर्दै आश्रमबाट अलग हुनको लागि, आश्रमलाई अलग्गै रुपमा, स्वायत्त रुपमा दर्ता गराउँदै सिद्धाश्रम शक्ति केन्द्रको दिव्य च्यानल छुटाउने कोशिश भइरहेको सन्दर्भमा यो कुरा निश्चय नै महत्त्वपूर्ण छ । जब कोही आश्रमको कार्यकर्ता बनेर आश्रमलाई नै निरन्तर घात गरिरहन्छ भने त्यतिखेर अवश्य नै सोच्नु पर्ने स्थिति आउँछ । आश्रमभित्र बसेर आश्रम विरुद्ध षडयन्त्र गरिरहने, आफ्नो छुट्टै गूट बनाउने, व्यक्तिहरुलाई सिद्धि, शक्तिको लोभ देखाएर आश्रम छाड्नलाई दवाव दिइरहने, आश्रमबाट सम्पन्न तालिम कार्यक्रममा गुरु सेवक सेविकालाई नजान प्रेरित गर्ने, बिना आधार बिना

प्रमाणका कपोलकल्पित कुराहरु गर्ने, आश्रमबाट भइरहेको कार्यक्रम नै रोकियो भनी झूट बोलेर अन्यत्रको कार्यक्रममा बोलाउने, गोरक्ष निखिल वाणी प्रकाशन बन्द हुँदैछ भन्दै हिँड्ने, यहाँसम्म कि गुरु आरतीमा समेत जानबाट रोक्ने, सिद्धाश्रम शक्ति केन्द्र बन्द हुँदैछ भन्दै हिँड्ने, 'गुरु आश्रममा गुरु नै हुनुहुन्न' समेत भन्ने यस्ता व्यक्तिहरु कसरी सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ता हुन सक्छन् ? सिद्धाश्रम शक्ति केन्द्रको कार्यकर्ताको खोल ओढेर जब व्यक्तिहरु आश्रम भत्काउने कार्यमा जुटिरहेका हुन्छन् त्यस्तो अवस्थामा पनि उनीहरुमाथि कुनै कारवाही नगर्नु, उनीहरुलाई कार्यकर्ता र अझ भनौं सिनियर कार्यकर्ताको सम्मानित दर्जा दिइरहनु अवश्य नै आश्रमको निरीहता हुन्छ र यस्तो कुरा अवश्य पनि ती कार्यकर्ताहरुलाई सह्य हुँदैन जो आश्रमको अस्तित्वमा नै आफ्नो अस्तित्व देख्दछन्, आफ्नो हरेक ढुकढुकीमा गुरु आश्रमलाई राख्दछन्, र आश्रमप्रति असीम प्रेम गर्दछन् । यिनै कारणले, आश्रम बिगार्ने भत्काउने तत्त्वहरुप्रति सबैलाई सचेत बनाउँदै उनीहरुको निष्काशन भएको छ । तर यी सबै वास्तविकता हुँदाहुँदै पनि आश्रम मौन बसिरहनु र बाहिरबाट अनेक अनर्गल कुराहरुको प्रचार भइरहनुले कार्यकर्ता माझ अन्यौलको स्थिति सृजना भइरहेको परिप्रेक्ष्यमा यो रिफ्रेशमेन्ट कार्यक्रमले महत्त्वपूर्ण स्थान राखेको छ ।

उक्त कार्यक्रमअन्तर्गत उहाँले भन्नुभएको थियो, 'आश्रम शून्यावस्थाबाट यहाँसम्म गुरुकृपाले गर्दा आएको हो, न कि कुनै व्यक्तिको अथवा संयोजकहरुको क्षमताले । आश्रममाथि गुरुकृपा भयो, गुरुदेवले हेर्नुभयो केवल यसकारण कि यहाँ

## सच्याइएको

गतांकको श्रीनवनाथस्तोत्रम्मा परतोषमुपेत्य स नाथ इत: प्रददाति मनोरथमात्मसुखम् हुनु पर्नेमा अन्यथा हुन गएकोले सच्याइएको छ ।

# आश्रम गतिविधि

हजारौँको भावभक्ति छ, हजारौँको त्याग तपस्या छ ।' यस्तो वास्तविकता हुँदाहुँदै पनि आश्रममा व्यक्तिवादी प्रवृत्ति हावी हुनु, व्यक्तिलाई सर्वेसर्वा ठान्नु र व्यक्तिको पछाडि लाग्नु बुद्धिमानी कुरा कसरी हुन सक्छ ? मुख्य कुरा शिष्य धर्ममा बस्नु हो, सही शिष्य बन्नु हो । वास्तवमा नै गुरुदेवलाई सही शिष्यको आवश्यकता छ, न कि गुरु बन्ने प्रवृत्तिको । यो संक्रमणकालमा सबैतिर उथलपुथल छ, अन्यौल छ, पीडा छ, यस्तो स्थितिमा पनि धैर्य नगुमाउनु, आफ्नो धर्म र कर्तव्य नछाड्नु र सत्यतालाई सधैँ आधार बनाइरहनु अत्यावश्यक छ । यो घारघुरको स्थितिमा गुरुदेवहरुले सबै हेरिरहनु भएको छ, जो सही छ उसलाई समयले अवश्य पनि सही रुपमा अघि बढाउनेछ किनकि गुरुदेव हुनुहुन्छ, पलपलमा हुनुहुन्छ, कणकणमा हुनुहुन्छ ।

कार्यक्रममा कार्यकर्ताहरूको जिज्ञासाको जवाफ दिँदै उहाँले हाजिना टिम, अनाप शैली हाल सक्रिय नरहेको जानकारी गराउनुभयो । उहाँले अनाप शैली संस्थालाई दिइएको हो, न कि कुनै व्यक्ति विशेषलाई भन्नुभयो । गुरुदेवहरुले यस्ता धेरै शैलीहरु शुरुबाट दिइरहनु भएको छ र भविष्यमा पनि यस्ता शैली संस्थालाई प्राप्त भइरहने छन् । आन्तरिक संगठनका विकृतिहरूतिर इशारा गर्नुहुँदै शैलीहरू सफल वा असफल हुन सक्छन्, यो शैलीको नाममा हाल भइरहेका भ्रामक प्रचारहरु, प्रलोभनबाट सचेत हुन सबैको लागि आवश्यक छ । शैली आफैमा ठूलो होइन, ठूलो त गुरुसत्ता हो । उहाँले अगाडि भन्नुभयो– 'त्यसैले गुरु सत्ताकै मात्र पछि लाग्नु पर्ने हामी सबैको कर्तव्य हो ।' उहाँले संस्थामा सावर पन्थी र सावर मातृकाको व्यवस्था भने यथावत् रहेको जानकारी दिनुभयो । उहाँले सावर पन्थी, सावर मातृकाहरूलाई पनि आवश्यकताभन्दा माथि नराख्न आग्रह गर्नुभयो ।

कुनै कुनै व्यक्ति कहिले कता कहिले कता आश्रम धाउने, कहिले कसैको कुरा सुन्ने, कहिले कसैको अगुवाई गर्ने हुन्छन् । यस्तो स्वभावका व्यक्तिहरूले के बुझ्नुपर्छ भने व्यक्तिलाई जहाँ इच्छा लाग्छ, ऊ त्यहाँ जान सक्छ तर घर-घरमा फोन गर्नु, भेटेर भड्काउने, सिधासाधा कार्यकर्ताहरुलाई अनेकौं दवाव , प्रलोभन आदि दिइरहनु गलत प्रवृत्ति हो र यस्तो कार्यको खुलेर विरोध गर्नुपर्ने हुन्छ । आश्रम बन्द भएको, विद्याश्रम बन्द हुने, पत्रिका बन्द हुने हल्लाजस्ता निराधार हल्लाहरूबाट विचलित नभई सम्पूर्ण रूपले भक्तिभावका साथ गुरु कार्यमा लाग्नुपर्ने बताउनु भयो । उहाँले भन्नुभयो, 'असत्यलाई आधार बनाएर गरिएको कार्य अवश्य नै दिगो हुँदैन ।'

उहाँले संस्थाको नाममा रहेको जमीन बेचेर खाने षडयन्त्र भइरहेको भन्ने हल्ला निराधार भएको स्पष्ट पार्नुहुँदै यस्तो निराधार हल्ला फैलाएर सबैको मानसिकता बिथोल्ने षडयन्त्र भइरहेकोतर्फ सचेत पार्नुभयो । उहाँले बताउनुभयो– गुरुको सम्पत्ति जसले हिनामिना गरे पनि कसैलाई सह्य हुँदैन । उहाँले सिद्धाश्रम शक्ति केन्द्र र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम एकै ठाउँमा राख्नका लागि सोही अनुसारको जग्गाको खोजी भइरहेको जानकारी पनि गराउनुभयो ।

आश्रममा हालैको घटनाबाट सबैमा निरुत्साह, निराशा छाएको छ । यस्तो अवस्थामा जप, ध्यान गर्ने उत्साह, उमङ्ग नहुन सक्छ । तर अब राम्रो समय आएको बताउनु हुँदै नयाँ-नयाँ कार्यक्रमहरूबाट हामीमा पुनः नयाँ जोश-जाँगर आउनेमा उहाँले आशावादी हुन आग्रह गर्नुभयो । उहाँले कार्यकर्ताहरूमा भएको अहंभाव हटाउनु पर्ने आवश्यकतातिर पनि सबैको ध्यानाकर्षण गर्नुभयो । आश्रममा भएको उथलपुथलले हामीलाई सचेत बनाएको हो भने हामी सबैले पुनः एकपटक सोच्नुपर्ने भएको छ– कतै हामीमा पनि अहंको बास त छैन ? अहंकारीहरू नै आश्रम र साधक साधिकाहरूलाई कमजोर पार्ने कार्यमा दत्तचित्त भएर लागेका छन्, यसलाई चकनाचूर पार्नु सबै निरहंकारीहरूको कर्तव्य हो ।

हामी सबैकी आमा यो आश्रम हो, किनकि हाम्रो जीवनको आध्यात्मिक धरातल यसै आश्रमबाट उभिन पुगेको हो । यसलाई धोका दिनु, बिगार्नु भनेको आमालाई धोका दिनु हो । त्यसैले यस्तो कृतघ्नता हामीमध्ये कसैबाट पनि नहोऊन्– उहाँले सबैलाई सचेत पार्नुभएको थियो ।

आश्रममा हालै अति नै खट्किएको विषय अनुशासन र नीति-नियम हुन् । आश्रममा घटेका घटनापश्चात् साधक साधिका कार्यकर्ताहरूमा आश्रमको नीति-नियम र अनुशासनलाई तोड्ने प्रवृत्ति अति दुःखको कुरा हो । अन्य संघ-संस्थाले पनि सिद्धाश्रम शक्ति केन्द्रको प्रशंसा गर्नुपर्‍यो भने यहाँको नीति-नियम र अनुशासनको खुलेर प्रशंसा गर्छन् । तर अहिले आश्रमको नीति-नियम, अनुशासन पालनामा भएको कमी-कमजोरी र आत्मीयतामा आएको कमीलाई यसै रिफ्रेशमेन्ट कार्यक्रमदेखि नै हटाउनु पर्ने बताउनुभयो ।

अहिलेको उथलपुथलले भने गुरुदेवको योजनामा कुनै प्रभाव नपर्ने कुरामा हामी विश्वस्त भने हुन सकिन्छ, किनकि आश्रममा हामीले देखे भोगेका कुरा नै हुन् कि कुनै युनिट, उपविभाग वा आरती संचालन केन्द्र, सम्पर्क कार्यालयहरूमा कुनै कार्यकर्ताको अभावको स्थितिमा पनि कति मजासँग गुरु कार्य हुन्छ। कहिलेकाहीं फलाना कार्यकर्ता नहुँदो हो त कसरी यो गुरु कार्य हुन्छ भन्ने शंकालाई पनि गुरुदेवले राम्रैसँग समाधान गरिदिनुभएको छ । हामीले हेक्का राख्नुपर्छ कि कसैको पुरुषार्थले यो संस्था चलेको होइन। संस्था त गुरुदेवहरूको कृपा, आशीर्वादले चलेको हो र चलिरहने नै छ । त्यसैले यी घटनाहरू त अप्रिय छन् नै, तर यसबाट गुरुहरूको महान् योजना र आश्रम संचालनमा कुनै पनि प्रभाव पर्ने छैन । मुख्य कुरा गुरु तत्त्व हो, उहाँको योजना हो, व्यक्ति केही होइन, कोही होइन ।

गुरु योजनालाई मूर्तरूप दिन हामी सबै स्वस्थ, जागरुक हुनु आवश्यक हुन्छ । हामीलाई जागरुक पार्ने धेरै माध्यममध्येको योगलाई चाँडै नै संस्थामा व्यवहारिक बनाइने भएको छ । यसका लागि चाँडै नै योग कक्षा संचालन हुने भएकोले प्रशिक्षक बन्न चाहनेहरूलाई आवेदन दिने व्यवस्था गरिएको बारे पनि कार्यक्रममा जानकारी दिनुभयो । संस्थामा चाँडै नै संगीत शिक्षाको व्यवस्था हुने पनि उहाँले बताउनु भयो । कार्यक्रममा पूजनीय गुरुमाताको अभिनन्दन कार्यक्रमका बारेमा पनि प्रकाश पारिएको थियो ।

उक्त कार्यक्रममा सावर पन्थी साधक रामजी अर्यालले गुरु योजनामा सबै दत्तचित्तले लाग्नु पर्ने आवश्यकतामाथि जोड दिनुभएको थियो । हामीले स-साना कुरामा नअल्झिई गुरु योजना अगाडि बढाउनु पर्ने र विगतका गल्ती, कमी-कमजोरीहरू स्वीकारेर आत्मालोचना गर्दै अगाडि बढ्नु पर्नेतर्फ इंगित गर्दै संस्थामा सबैको लागि स्थान भएको र गल्ती सच्याएर जो पनि संस्थामा अट्न सक्ने र व्यक्तिगत रीस, राग र द्वेष नराखी सबै संस्थामयी बन्नुपर्ने धारणा राख्नुभएको थियो । उहाँले आउँदो माघमा सम्पन्न हुन गइरहेको पूजनीय गुरुमाताको अभिनन्दन कार्यक्रम संस्थाको लागि ठूलो उपलब्धि भएको बताउनु भयो । हरेक कुरामा गुरुलाई आधार बनाउनु पर्ने, निखिललाई आधार बनाउनुपर्ने गुरुमाताको निर्देशन रहेको बारेमा पनि उहाँले कार्यक्रममा बताउनु भयो ।

उक्त रिफ्रेशमेन्ट कार्यक्रममा बास्केटबलमा एक मिनेटमा ४ सय चालीस पटक बिटिङ्ग गरेर विश्व रेकर्ड राख्ने गुरु सेवक थानेश्वर गुरागाईंलाई सम्मान गरिएको थियो । उहाँले एक मिनेटमा ४२० पटक बिटिङ्ग गर्ने नेडरल्याण्डका कीरण हार्पलको विश्व रेकर्डलाई तोडेर नयाँ रेकर्ड बनाउनुभएको हो ।

समग्रमा यो रिफ्रेशमेन्ट कार्यक्रमले यही कुरा सिकायो कि गुरुदेवहरुको कृपा त्यहीं बर्सन्छ जहाँ उहाँप्रति भावभक्ति छ, समर्पण छ। घटना परिघटना त समय समयमा घटित भइरहन्छन् तर गुरु योजना त आफ्नो गतिमा अघि बढ्छ नै । सिद्धाश्रम शक्ति केन्द्रको भविष्य स्वर्णिम छ नै। यो सबै हुँदाहुँदै पनि किन दुःख ? किन विचलन ? त्यसैले सबै दुःख, पीडाहरुलाई छाडेर आफ्नो कर्तव्य पथमा अघि बढ्न आवश्यक छ, गुरुदेवहरुले शिष्यहरुको काँधमाथि दिनुभएको जिम्मेवारीलाई स्मरण गर्दै आफ्नो जीवनलाई गुरु सेवामा विसर्जित गर्न आवश्यक छ ।

जय गुरुदेव !

## हार्दिक बधाई

'गिनिज बुक अफ ओर्ल्ड रेकर्ड्स'मा बास्केटबललाई एकमिनेटमा सबैभन्दा धेरै बिटिङ्ग गरेर विश्व कीर्तिमान कायम गर्न सफल हुनु भएकोमा आत्मीय गुरु सेवक **थानेश्वर गुरागाईं**लाई हार्दिक बधाई ज्ञापन गर्दै उहाँको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं।

**– सिद्धाश्रम शक्ति केन्द्र परिवार**

## *पूजनीय गुरूमाताको काठमाडौं आगमन र*

# अभिनन्दन समारोह

'पूजनीय माता भगवती देवी श्रीमालीज्यूको आउँदो माघ २२/२३ गते राष्ट्रिय अभिनन्दन समारोहका साथै अन्तर्राष्ट्रिय साधना शिविर' सम्पन्न हुन गइरहेको घोषणापछि चरम आनन्दको उत्कर्षले अहिले ऐतिहासिक प्राचीन नगरी काठमाडौं तातेको छ। यतिबेला वातावरणमा प्रबल खुशीयाली छाएको छ। पूजनीय गुरुमाताका भक्त, गुरु सेवक-सेविका, शिष्यहरुमा एक प्रकारको रौनक छाएको छ, एक किसिमको प्रसन्नता छाएको छ। यही रौनक र प्रसन्नता बोकेर हामी पूजनीय गुरुमाताको काठमाडौं आगमनको व्यग्र प्रतीक्षा गरिरहेका छौं।

सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा हुन गइरहेको यस ऐतिहासिक अभिनन्दन समारोह एवं साधना शिविरमा पूजनीय गुरुमातालाई नेपालका महामहिम राष्ट्रपतिको बाहुलीबाट सम्मान प्रदान गरिने कार्यक्रम तय भएको छ। कार्यक्रममा पूजनीय गुरुमाताको सान्निध्यमा दीक्षालगायत विशेष साधना कार्यक्रम मात्र सम्पन्न हुने नभई स्वयं माताजीकै मुखारविन्दबाट गुरुमन्त्र पनि प्रदान हुने हुनाले यो समारोह आफैमा ऐतिहासिक, अभूतपूर्व र अद्वितीय हुने निश्चित छ।

पूजनीय गुरुमाताकै सान्निध्यतामा धेरै ठाउँमा अनगिन्ती शिविरहरु सम्पन्न भइसकेका छन्। तर स्वयं उहाँले नै मन्त्र प्रदान गर्नु भएर साधना सम्पन्न हुने भएकोले यो शिविर सबैका लागि सौभाग्यको विषय भएको छ। सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा माताजीकै श्रीमुखबाट गुरुमन्त्र पाउनु र दीक्षित हुनु सबैका लागि अहोभाग्य हो। यसका लागि पूजनीय गुरुमाताको श्रीचरणकमलमा कोटिकोटि वन्दना गर्दछौं, कोटिकोटि नमन गर्दछौं। यस समारोहलाई आफ्नो आयोजनामा सम्पन्न गर्ने अवसर पाएकोमा सिद्धाश्रम शक्ति केन्द्र गौरवान्वित त छँदैछ, यसबाट संस्थाको महिमा र गरिमा अझै चुलिएको सर्वत्र आभाष भएको छ।

**करुणामयी, ममतामयी, स्नेहमयी माताजी र परमपूज्य सद्गुरुदेवमा कुनैपनि भेद नभएको कुरा सद्गुरुदेवले धेरै पटक भन्नुभएको छ। परमपूज्य सद्गुरुदेवको सम्पूर्ण गुरुत्व शक्ति धारण गरेर बस्नुभएकी पूजनीय गुरुमाताको अभिनन्दनका लागि व्यग्र सिद्धाश्रम शक्ति केन्द्र, यसका सम्पूर्ण गुरु सेवक-सेविका, भक्त,**

**प्रशंसकहरु अति नै सौभाग्यको अनुभूतिमा अहिले चुर्लुम्म डुबेर आवश्यक गुरु कार्यमा मस्त भइरहनु भएको छ, हराइरहनु भएको छ।** आध्यात्मिक धरातलमा आफ्नो छुट्टै छवि बनाइसकेको सिद्धाश्रम शक्ति केन्द्रजस्तो विशुद्ध संस्थाबाट पूजनीय गुरुमाताको अभिनन्दन हुनु संस्थाकै लागि ऐतिहासिक विषय भएको छ भने यसबाट परमपूज्य सद्‌गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा, अनुकम्पा एवं आशीर्वाद प्राप्त गर्ने क्रममा फेरि एकपटक ठूलो अनुकम्पाको अनुभूति संस्थालगायत सबैले गरिरहेको छ।

पूजनीय गुरुमाताको आगमनले विश्व मानचित्रमा नेपालको पनि महिमा र गरिमा बढ्न जानु स्वभाविक छ। गोरखभूमि नेपाल अहिले पूजनीय गुरुमाताको आगमनबाट कृतकृत्य हुने प्रतीक्षामा छ। हामी सबै नेपालीहरु अहिले गौरवान्वित भइरहेका छौँ। परमपूज्य सद्‌गुरुदेवहरुले यसपटक नेपाल, नेपालीहरुलगायत सबैका लागि माताजीको कृपा, अनुकम्पाका लागि विशेष निगाह गर्नुभएको छ। आफ्ना भक्त, शिष्यहरुको सर्वोतोमुखी उन्नति, प्रगति, खुशीका लागि आफूलाई समेत बिर्सने परमपूज्य सद्‌गुरुदेवहरुको विशेष कृपा फेरि बर्सन गइरहेको छ– पूजनीय माताको अभिनन्दन समारोह र साधना शिविरमार्फत्।

यस समारोहमा भाग लिएर हामीले आफ्नो सौभाग्यलाई फेरि एकपटक चम्काउन गइरहेका छौँ। विश्वकै इतिहासमा दुर्लभ समारोहको रुपमा सम्पन्न हुने यस कार्यक्रममा सहभागी भएर पूजनीय गुरुमाताको आशीर्वादका साथै परमपूज्य सद्‌गुरुदेवका कनिष्ठ सुपुत्र गुरुदेव अरविन्द श्रीमालीज्यूको आशीर्वाद लिने सौभाग्यबाट पनि वञ्चित नहोऔँ।

# प्रेरणा स्रोत

# पूजनीय गुरुमाता भगवती देवी श्रीमाली

पूज्य गुरुदेव अति व्यस्त रहनुहुन्थ्यो । उहाँमा कति जीवनी शक्ति थियो भन्ने कुरा अनुमान गर्न गाह्रो थियो । उहाँ दिनको अठार घण्टा काम गरेर पनि थाक्नुहुन्नथ्यो, उहाँको अनुहारमा सधैँ ताजापन देखिन्थ्यो, उहाँको हाँसोमा सधैँ उही मधुरता देखिन्थ्यो । गुरुदेवकै शब्दमा भन्दा यदि यसको पछाडि कुनै रहस्य छ भने त्यो हो "माताजीको सेवा र शक्ति ।"

यदि उपमा दिने हो भने पूजनीय माताजी निर्मल गङ्गासमान प्रवाहमान हुनुहुन्छ, जसमा स्नान गरेर मनमा शान्ति, पवित्रता, स्निग्धता र सुख मिल्दछ ।

परमपूज्य गुरुदेवले घर छोड्नुभएको तीन वर्ष मात्र बितेको थियो । तब उहाँले पूजनीय गुरुमाताको नाममा एउटा चिठी लेख्नुभयो । परमपूज्य गुरुदेव नारायण दत्त श्रीमालीज्यूले पत्रमा लेख्नुभएको थियो– मैले तिम्रो भावनालाई पढेको छु, तिम्रो व्यक्तित्वबाट जति परिचित छु, त्यसमा म आश्वस्त छु र तिम्रो त्यागको प्रकाशमा मेरो मार्ग स्पष्ट भइरहेको छ । आज नभए पनि आउने समयले यस कुरालाई स्वीकार गर्नेछ कि मेरो निर्माण पछाडि सम्पूर्ण रूपमा तिम्रै हात छ । तिमीले गरेका त्याग मेरो त्यागभन्दा धेरै नै बढी छ । तिम्रो त्यागको प्रकाशमा नै म अगाडि बढ्न सकेको हुँ । मेरो पछाडि तिम्रो ठूलो प्रेरणा र शक्ति लुकेको छ ।

प्रसन्नताको क्षणमा परमपूज्य गुरुदेवले एक ठाउँमा भन्नुभएको छ– यिनी मेरी पत्नी मात्रै होइनन्, पथप्रदर्शिका पनि हुन् । आज जे जति मेरो निर्माण भएको छ, त्यो यिनको सेवा र त्यागको पृष्ठभूमिमा भएको छ । त्यसैले म यस जीवनमा यिनको ऋणी भएको छु । परमपूज्य गुरुदेवले शास्त्रवचन उल्लेख गरेर भन्नुभएको थियो कि पत्नीका चार अवस्था हुन्छन्– भोजनको समयमा उनको स्वरुप आमाको जस्तै हुन्छ । जसरी आमाले आफ्नो बच्चालाई कर गरेरै भए पनि भोजन गराउँछिन् । आराम गर्ने समयमा उनको स्वरुप दासीको जस्तै हुन्छ, जसरी भृत्यले सम्पूर्ण रुपमा स्वामीलाई केही पनि असुविधा नहोस् भनेर ख्याल राख्छ, त्यसरी नै सुलक्षणा पत्नीले आरामको समयमा दासीजस्तै भएर सेवा गर्छिन् । शयनको बेलामा पत्नी प्रेमिका जस्तै हुन्छिन् र आपत्को समयमा भने सच्चा साथीजस्तै हुन्छिन् । शास्त्रवचनपछि गुरुदेवले बताउनुभएको

थियो कि पूजनीय गुरुमाताले यी सबै रुपमा उहाँको सेवा गर्नुभएको छ ।

श्रीमाली सन्देश नामक एक पत्रिकामा परमपूज्य गुरुदेवले अन्तर्वार्ताको क्रममा माताजीको प्रशंसा गर्नुभएको छ– "मेरी पत्नी भगवतीदेवी एक संस्कारवान, धर्मपरायण महिला छिन् र यो मेरो सौभाग्य हो कि यस्ती उच्चकोटिकी पत्नी मलाई प्राप्त भएको छ । यस जन्ममा मात्रै होइन, यदि मैले अर्को जन्म पनि लिनुपर्‍यो भने यस्ती नै पत्नी प्राप्त होस् भन्ने भगवान्‌सित आकांक्षा राख्छु । किनकि उनले दुःखको दिनमा मेरो धेरै सहायता गरेकी छिन्, हिम्मत दिएकी छिन् र अगाडि बढ्ने प्रेरणा दिएकी छिन् । सबैभन्दा ठूलो कुरा त यो हो कि उनले धार्मिक र आध्यात्मिक कार्यमा सहयोग पुर्‍याएकी छिन् । पछिल्ला पचास वर्षमा हामी पति–पत्नीबीच कहिल्यै कुनै पनि क्षण तनाव भएन, झगडा भएन । यो उनको सहनशीलता र मेरो सौभाग्य हो । आज पनि हामी दुवै सँगै उठेर पूजापाठ गर्छौँ । म आफ्नो कार्यमा दत्तचित्त हुन्छु र उनी बिहान–बेलुकी प्रभुको भजन, चिन्तनमा समय व्यतीत गर्छिन् । यो भन्दा ठूलो कुरा यो छ कि हामी दुवै स्वस्थ छौँ र प्रभुको हामीमाथि असीम कृपा रहेको छ ।"

वास्तवमा माताजी विविध स्वरुपकी हुनुहुन्छ । गुरुदेवको प्रत्येक क्षणको ध्यान राख्नु उहाँले आफ्नो कर्तव्य सम्झनुभएको थियो । उहाँले स्वयंको कुनै अस्तित्व नराखी आफ्ना सबै कुरा गुरुदेवमा नै लीन गर्नुभएको थियो । एक किसिमले उहाँ पतिमय नै हुनुभएको थियो ।

माताजीको व्यक्तित्वको, उहाँको सरलताको, उहाँको पवित्रता रधार्मिकताको प्रभाव पुरै घरमा, घरको अणु–अणुमा छ ।

पूजनीय माताजी सबेरै उठ्नुहुन्छ, नित्य क्रियाबाट निवृत्त भएर पूजा घरमा जानुहुन्छ । सबेरैदेखि रातिको साढे एघार बजेसम्म उहाँ दुई कार्यमा प्रायः व्यस्त रहनुहुन्छ– पति सेवा, अतिथिहरुको सेवा वा ईश्वर चिन्तन, पूजा–पाठ, धार्मिक चर्चा आदि । उहाँको घरमा बाह्रै महिना कुनै न कुनै धार्मिक कार्य चलिरहन्छ । कति अनाथ बच्चाहरु त माताजीको सहायताबाटै पालिएका छन्, कति बच्चाहरुको शुल्क माताजीले नै तिरिदिनु हुन्छ, कति रोगीहरुलाई माताजीले फलफूल, दूध आदि पुर्‍याउनु हुन्छ । यति सबैका बावजूद पनि कुराकानीमा उहाँबाट एकै वाक्यमा उत्तर मिल्छ– "सबै रामजी गर्नुहुन्छ, म को हुँ र गर्ने ?"

वस्तुतः माताजी मातृस्वरुपा हुनुहुन्छ– या देवी सर्वभूतेषु रुपेण संस्थिता ।

अध्यात्म हर युगको आवश्यकता हो। जब हर युगमा आध्यात्मिक पक्ष ओझेलमा पर्दछ तब स्वतः नै हत्या, हिंसा, अन्याय, अत्याचार बढ्दछ। मान्छेले गरेका प्रत्येक राम्रा नराम्रा कर्महरुको फल उसले अवश्य नै प्राप्त गर्दछ चाहे यो जन्ममा होस् अथवा अर्को जन्ममा। आध्यात्मिक भावमूमिले सधैँ यो सन्देश दिइरहने हुनाले आध्यात्मिक मानिस पापकर्म गर्नबाट डराउँछ र स्वतः ऊ राम्रा कर्महरु गर्न प्रेरित भइरहन्छ। तर जब व्यक्ति भौतिकतामा डुब्दछ, वर्तमान समयलाई नै सबै कुरा ठान्दछ र क्षणिक सफलताको लागि जस्तोसुकै कार्य गर्न पनि पछि पर्दैन, प्रभुको दरवारमा रौं बराबर पनि हिसाब किताब यताउता हुँदैन भन्ने कुरा बिर्सन्छ तब पापकर्महरुमा डुब्दै जान्छ। परिणामतः समाजमा अशान्ति, अत्याचार बढ्दै जान्छ।

आध्यात्मिक विमुखताको कारणले नै वर्तमान समय संकटग्रस्त छ, तनावग्रस्त छ। तसर्थ, पुनः एकपल्ट धर्तीलाई आध्यात्मिक शीतलताले आपूरित गर्न अत्यावश्यक छ। जहाँ अध्यात्म छ, त्यहाँ स्वतः नै प्रेम, दया, क्षमा आदि सद्‌गुणहरु हुन्छन्। प्रेम निसन्देह अध्यात्मको सार हो। त्यसैले त अध्यात्मले 'बसुधैव कुटुम्बकम्' भनी सम्पूर्ण धर्तीबासीलाई एउटै परिवार ठानी प्रेम गर्न सिकाएको छ। प्रेम र दया अध्यात्मका आभूषण हुँदाहुँदै पनि जब अन्याय, अत्याचार, पाखण्ड, अभिमान चरम विन्दुमा पुग्दछन् तब अध्यात्ममा फेरि क्रान्ति अत्यावश्यक बन्दछ।

भगवान् श्रीकृष्ण प्रेम र माधुर्यका प्रतीक हुनुहुन्थ्यो। आफ्नो अवतरणकालभरि उहाँले सबैलाई प्रेमकै सन्देश दिइरहनुभयो। तर पनि कौरवहरुको अभिमानी र अत्याचारी मनोवृत्तिमाथि कुनै परिवर्तन आएन। फलतः महाभारत युद्ध रचाउन उहाँ बाध्य हुनुपऱ्यो। मर्यादा पुरुषोत्तम भगवान् श्रीराम शान्ति, दया, क्षमा, विनम्रताका पर्याय हुनुहुन्थ्यो तर पनि रावणको वध गर्न बाध्य हुनुभयो। आफ्ना सबै सन्ततीलाई असीम माया गर्ने माता जगदम्बिके भवानी ममता र करुणाकी मूर्ति हुनुहुन्छ। तर सबै प्राणीहरुलाई अति नै माया गर्ने, सबैप्रति दया र क्षमाभाव राख्ने, सबैकी आमा पनि जब अति हुन्छ महाकाली बनेर आफ्नै संततिको संहार गर्न बाध्य हुनुहुन्छ।

दया, क्षमा, उदार भाव कुनै पनि आश्रमको लागि आवश्यक आयामहरु हुन्। वास्तवमा आश्रम भन्नु नै सबैका आश्रय स्थल हो जहाँ राम्रा व्यक्तिहरु पनि अटाउँछन् र नराम्रा व्यक्तिहरु पनि अटाउँछन्। सहनु र झुक्नु निश्चय नै दैवी गुणहरु हुन्। तर यसो भनेर धेरै सहनु पनि अत्याचारलाई प्रश्रय दिनु हुँदोरहेछ। जब आश्रममा व्यक्तिगत स्वार्थ हावी हुन्छ, जब हजारौं मानिसहरुको भावभक्तिमाथि खेलवाड हुन्छ, जब सिधासाधा मानिसहरुलाई अनेकौं प्रलोभन देखाएर दिग्भ्रमित गर्ने कोशिश हुन्छ तब कठोर निर्णय लिनुपर्ने स्थिति स्वतः नै आउने रहेछ। किनकि व्यक्ति वा समूहको हित वा बचावभन्दा हजारौं हजारको हित ठूलो कुरा, हजारौं हजारको समर्पणमाथि खेलवाड नहुनु ठूलो कुरा हो, अनि सबैभन्दा ठूलो कुरा हो आश्रमको लक्ष्य र गन्तव्य।

अस्तु !

१-३: मंसिर महिनामा सम्पन्न दिव्य गुरु महोत्सव। ४-७: गत महिना सम्पन्न मासिक हवन कार्यक्रम। ८-११: गत महिना सम्पन्न रिफ्रेशमेन्ट तालिम। १२: भक्तपुरको थलीमा गत महिना सम्पन्न भजनकीर्तन। १३: तीनकुने आश्रममा सम्पन्न बृहस्पतिबार गुरुपूजनको क्रममा हवन। १४-१५: ललितपुरमा सम्पन्न ध्यान तथा कार्यकर्ता प्रशिक्षण ।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौराषीनाथै जगाऊँ
फुटो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।
मानव जीवनलाई धन्य बनाऔं ।।